# धर्मसंग्रह कोश

(पं. दिव्यवज्र वज्राचार्यद्वारा अन्वेषित एवं नेपालभाषामा सम्पादित पुस्तकको नेपाली भाषामा अनुवाद)




अनुवादक

डा. नरेश मान बज्राचार्य



प्रकाशक

सुभाष बज्र बज्राचार्य


पूजनीय बुबा स्व. हेमबज्र बज्राचार्य तथा
आमा सिद्धि कुमारी बज्राचार्यको स्मृतिमा यस पुस्तक धर्मदान गरिएको छ।

# धर्मसंग्रह कोश

(पं. दिव्यबज्र बज्राचार्यद्वारा अन्वेषित एवं नेपालभाषामा सम्पादित
पुस्तकको नेपाली भाषामा अनुवाद)

अनुवादक
डा. नरेश मान बज्राचार्य

प्रकाशक
सुभाष बज्र बज्राचार्य

---

पूजनीय बुबा स्व. हेमबज्र बज्राचार्य तथा आमा स्व. शिद्धि
कुमारी बज्राचार्य को स्मृतिमा यस पुस्तक धर्मदान गरिएको छ ।

**धर्मसंग्रह कोश**
(पं. दिव्यबज्र बज्राचार्यद्वारा अन्वेषित एवं नेपालभाषामा सम्पादित पुस्तकको नेपाली भाषामा अनुवाद)

पहिलो संस्करण: बि.सं.२०६७ मंसिर १६, द्वादशी



प्रकाशक : सुभाष बज्र बज्राचार्य

सम्पर्क : फोन नं. ४२५१११११, पकनाजोल, काठमाडौं

विशेष सहयोग: पुष्प रत्न शाक्य

मुद्रण : संकटा प्रिन्टिङ्ग प्रेस
टेबाहाल, काठमाडौं



**श्री हेमबज्र बज्राचार्य**

जन्मः वि.सं. १९८८ फाल्गुण १८ गते

स्वर्गारोहणः वि.सं.२०६६ मंसिर २८ गते

(मार्गशिर्ष, कृष्णपक्ष, द्वादशी)



**श्रीमती सिद्धि कुमारी बज्राचार्य**
जन्म: वि.सं. १९९६ माघ शुक्ल श्रीपञ्चमी
स्वर्गारोहण: वि.सं.२०४२ पौष कृष्ण द्वादशी

# विषय सूचि



r

# प्रकाशकीय

हाम्रा पूजनीय आमा श्री सिद्धि कुमारी बज्राचार्यको वि.स.१९९६ माघ महिनाको श्रीपञ्चमीका दिन काठमाडौंको श्रीखण्डतरुमूल महाविहार (झोछेँ) मा बाजे ज्ञानमुनि बज्राचार्य र बज्यै कयो बज्राचार्यको कोखबाट जन्मनु भएको थियो । ४६ वर्षको अल्प आयुमै वि.सं. २०४२ सालको माघ महिनामा हाम्रो बुबालाई एक्लो तथा हामी ६ जना दिदि-भाई-बहिनीहरुलाई टुहुरा बनाई बित्नु भयो ।

आमाको देहावसान पश्चात् परिवारमा अत्यन्त शून्यताले छाएको थियो । तर बुबाको मनोबल तथा हौसला र हामी मध्ये सबैभन्दा जेठी दिदिले लिनु भएको जिम्मेवारीको कारण उक्त शून्यता बिस्तारै विलिन भई जीवन बिस्तारै सामान्य हुँदै गयो ।

हाम्रा बुबा श्री हेमबज्र बज्राचार्यको वि.सं.१९८८ फाल्गुन १८ गते काठमाडौंको हेमवर्ण महाविहार (गंबाहाल) मा बाजे पं. अमोघबज्र बज्राचार्य र बज्यै कूलप्रभा बज्राचार्यको कोखबाट जन्म भएको थियो । वहाँले त्रिचन्द्र कलेजबाट अंग्रेजी विषयमा स्नातक गरि केहि समय अध्यापन गर्ने कार्य गर्नु भएको थियो र पछि अध्यापन कार्य छोडेर केहि समय प्रेसको व्यवसाय अपनाउनु भएको थियो । त्यसपछि झण्डै आफ्नो ४० वर्षको जीवनकाल स्टेसनरी सामग्री बिक्री वितरणको व्यवसाय गरि बिताउनु भयो । वहाँको जीवनकालको यहि ४० वर्षको अथक प्रयास र मेहनतको कारण हाम्रो परिवारको आर्थिक अवस्थामा उल्लेख्य सुधार भएको थियो ।

हामीलाई आफ्नो जीवनकालमा हाम्रो बुबाले कहिल्यै पनि कुनै किसिमको कमी महशुस हुन दिनु भएन । आज

हामी जहाँ जे छौं, सबै वहाँके कारणले भएका हामीले अनुभूति गरेका छौं । वि.सं. २०३५ माघमा हाम्रा बाजे पं. श्री अमोघवज्र बज्राचार्यको देहावसान पछि हाम्रा बुवाले व्यस्त व्यवसायीक जीवनबाट सन्यास लिई आफ्नो कूल परम्परा अनुसार जजमानहरुका हितका लागि कर्मकाण्ड गर्ने तथा घरमै बसी सानो तिनो कारोबारमा लाग्नु भयो । यस बाहेक वहाँले धेरैजसो समय पुस्तकहरु पढेर बिताउनु हुन्थ्यो । पुस्तक पढ्नेमा वहाँको विशेष रुचि थियो । कुनै पनि धर्म सम्बन्धी र ठूला व्यक्तित्वहरुको जीवनी पढ्नमा बढि अभिरुचि राख्नु हुन्थ्यो । वहाँ भ्रमणमा पनि अभिरुचि राख्नु हुन्थ्यो । वहाँले भारतको बौद्ध तिर्थयात्राहरु गर्नुका साथै जापान चीन थाईलैण्ड तथा बर्माको पनि भ्रमण गर्नु भएको छ ।

वहाँले आफ्नो व्यावसायिक जीवनबाट अवकाश लिनु भएपछि विशेष गरि नेपालको बज्रयान बौद्धधर्मको संरक्षण तथा विकास र बज्राचार्यहरुको प्राचिन पूजा-विधि तथा परम्पराहरुको निरन्तरताको निमित्त विभिन्न सम्बन्धित संघ संस्थाहरुसंग आबद्ध भई काम गरेर समाजलाई योगदान दिने कार्यहरु पनि गर्नु भएको छ ।

आफ्नो जीवनकालमा कहिल्यै कसैलाई दु:ख कष्ट नदिने, सहयोग गर्ने, सबैसंग मिल्ने, सँधै अरुको भलो चिताउने स्वभावका हाम्रा बुबा ७८ वर्षको उमेरमा वि.सं. २०६६ सालको मंसिर १८ गतेका दिन यस संसारलाई त्यागि जानु भयो । वहाँको देहशावसानबाट हामी धेरै मर्माहत् भएका छौं ।

दिवंगत आमा-बुबाको स्मृतिमा एक धार्मिक पुस्तक प्रकाशन गरि धर्मदान दिने पारिवारिक निर्णय अनुसार हाम्रा ठूली आमाको माहिला छोरा बौद्ध विद्वान एवं प्यारा भाई

डा. नरेश मान बज्राचार्यलाई एक उपयुक्त पुस्तक लेखि दिन ठूलो दिदि सरला बज्राचार्य मार्फत् आग्रह गरियो ।

पं. दीव्यबज्र बज्राचार्य (दिवंगत) ज्यूद्वारा रचित, हाम्रा बाजे दिवंगत पं.अमोघबज्र बज्राचार्यज्यूको स्मृतिमा हाम्रा बुबा श्री हेमबज्र बज्राचार्यद्वारा वि.सं. २०३६ सालमा प्रकाशित "धर्मसंग्रह कोश" जुन बौद्ध धर्म दर्शनका शब्दहरुको ठिक ठिक अर्थ बुझ्नका लागि एक महत्वपूर्ण पुस्तक हो तर नेपाभाषामा सिमित थियो, उहि पुस्तकलाई नेपाली भाषामा अनुवाद भई प्रकाशन भएमा सर्वसाधारण देखि विश्वविद्यालयमा बौद्ध अध्ययन गर्ने-गराउनेहरु लाई समेत उपयुक्त हुने विचारले हाम्रा भाई नरेश मान बज्राचार्यबाट अनुवाद गने कार्य भयो र आज यो धर्मसंग्रह कोश (नेपाली अनुवाद) तपाईंको हातमा छ ।

बौद्ध धर्म दर्शन सम्बन्धी थोरै मात्र भए पनि ज्ञान प्राप्त गर्न यस पुस्तक सहयोगी हुनेमा हामी विश्वस्त छौं ।

यस पुस्तकका अनुवादक भाई नरेश मान बज्राचार्यलाई विशेष धन्यवाद दिन्छौं साथै अन्य सबै सहयागीहरुलाई पनि धन्यवाद दिन्दछौं ।

अन्तमा यस पुस्तक धर्मदान गरेको पुण्यले हाम्रा आमा-बुवाको सुखावती भूवनमा श्री अमिताभ तथागतको चरण कमलमा वास होस र अन्तमा सम्यक् सम्बोधि ज्ञान प्राप्त गर्न सकोस् भन्ने पुण्य परिणामना गर्दछौं ।

सुभाष बज्र बज्राचार्य तथा सपरिवार
पकनाजोल, काठमाण्डौं ।
मिति : २०६७ मंसिर १६ गते

# मन्तव्य

म Fulbright Scholar In Residence (SIR) 2009-2010 भएर अमेरीकाको भर्जिनिया कमनवेल्थ यूनिभर्सितिमा नेपालको बौद्धधर्म वज्रयान-पूजाविधि र बौद्धकला विषयमा Under Graduate र Graduate Level मा अध्यापन गर्दै थिएँ। अचानक "हेम वा" अर्थात् हेमवज्र वज्राचार्य दिवंगत हुनु भएको दु:खद सूचना फोनबाट सुनें । एकछिन म टोल्लाएँ, पछि वहाँको र मेरो अन्तिम भेट सम्फन थालें । गतवर्षको November मा ललितपुरमा एक अन्तरराष्ट्रिय बौद्ध गोष्ठिमा वहाँपनि सहभागी हुनु भएको थियो । त्यसवेला मलाई भन्नु भएको थियो- ल नरेश ! विरामी भएपनि तिम्रो कार्यक्रममा आएँ, राम्रो गर्यौ धन्यवाद।

अति श्रद्धेय बौद्ध विद्वान पं. श्री अमोघवज्र वज्राचार्य (ने.सं.१०३०–ने.सं.१०९९) को एकमात्र सुपुत्र हेमवज्र वज्राचार्यज्यू नाताले मेरो सानो बुबा (मेरी आमाको कान्छा बुबाको छोरीको श्रीमान्) हुनु हुन्थ्यो । त्यहि नाताले वहाँका घर पकनाजोलमा मेरो धेरै आवत जावत हुन्थ्यो । पछि म पुरोहित कार्यमा सक्रिय हुँदा बौद्धधर्म सम्बन्धित ग्रन्थ हेर्न (पढ्न लागि ग्रन्थ लिन जाने) कारणले आवत जावत अझ बढेको थियो । वहाँले मलाई बौद्ध पुरोहित कार्य गरि रहँदा प्रोत्साहन दिनु भएको सम्फन थालें, कति चोटि त वहाँको घरमा पनि मलाई आफै पुरोहित भएर पूजा-आजा गर्ने मौका दिनु भएको पनि सम्फना छ । सन् १९९१ मा बौद्धधर्म अध्ययनका लागि विदेशीएका थिएं । त्यसबेला कहिलेकाहिं वर्षा वा हिउँदको विदामा नेपाल फर्कंथें र वहाँलाई भेट्थें । प्रत्येक भेटमा खुल्ला हृदयले मेरो परिश्रम र अध्ययनको प्रशंसा गर्नु हुन्थ्यो । त्यो हिजोको कुरा जस्तो लाग्न थाल्यो ।

Ph.D. पश्चात् नेपाल फर्कें । कहिले ग्रन्थ हेर्न जाने क्रममा, कहिले नयाँ कार्यक्रमको लागि विचार-विमर्श एवं कायक्रमको लागि आर्थिक सहयोगको लागि भेट हुन्थ्यो । प्रत्येक भेटमा लामो समयसम्म विचार-विमर्श र समालोचनात्मक कुराकानी हुन्थ्यो । वहाँले मेरो प्रत्येक कार्यक्रमको लागि तन, मन र धनले सहयोग गर्दै आउनु भएको अविस्मरणीय छ ।

विश्वविद्यालयमा बौद्ध अध्ययन विषय पढ्न युवाहरुलाई उत्साहित पार्न छात्रवृत्ति प्रदान गर्न त्रिरत्नकोषको स्थापना गर्न वहाँ संस्थापक दाता सदस्य हुनु भई प्रत्येक महिना आर्थिक सहयोग गर्नु हुन्थ्यो । दिक्षा प्रदान गर्ने कार्यक्रममा पनि उल्लेखनीय आर्थिक सहयोग दिनु भएको थियो ।

दानबाट प्राप्त सबै रकम लुम्बिनी विकाश क्षेत्रमा वज्रयानी विहार निर्माण गर्ने उद्देश्यले आयोजित सामुहिक पञ्चदान कार्यक्रममा पनि प्रत्येक वर्ष आर्थिक दान दिनु हुन्थ्यो ।

शारिरीक हाउ-भाउ सहित हृदय देखि उन्मुक्त कण्ठले ठूलो स्वरले प्रशंसा गर्नु, साथै कार्यक्रमका लागि आर्थिक सहयोग दिनु वहाँको विशेषता थियो । मेरो लागि वहाँ उत्प्रेरक, समर्थक एवं सहयोगी हुनु हुन्थ्यो । वहाँको निधनले मैले धेरै कुरा गुमाएको अनुभूति गरि रहेको छु ।

सरला दिदि (हेमबज्र बज्राचार्यको जेष्ठ सुपुत्री) संग भेट भयो । दिदिले भन्नु भयो नरेश ! अब बुबाको नाउँमा वौद्धधर्म सम्बन्धी पुस्तक प्रकाशन गर्ने पारिवारिक मनशाय छ तिमीले उपयुक्त किताब लेखि दिनु पर्‍यो ।

मलाई लाग्यो म माथि रहेको हेम बाको उत्प्रेरक, समर्थक र सहयोगी स्वरुप ऋणका केहि अंश तिर्ने मलाई सुअवसर प्राप्त हुन आएको महशुस गरें र दिदिलाई भनें यो

त राम्रै कुरा भयो, मेरो लागि सौभाग्यको कुरा पनि भयो, बरु कस्तो खालको पुस्तक लेख्नु पर्ला ? विचार गरौं भनि कुरा टुङ्ग्याएं ।

केहि दिनपछि फेरि भेट भयो, विचार-प्रस्ताव राखें - "धर्मसंग्रह कोश" जुन पं. दीव्यवज्र बज्राचार्यवाट नेपालभाषामा संपादन गर्नु भएको लाई हेम वा (हेमवज्र बज्राचार्यज्यू)ले प्रकाशन गर्नु भएको थियो, त्यहि पुस्तक नेपाली भाषामा अनुवाद गरि प्रकाशित गर्ने हो भने त्यो पुस्तक बौद्ध धर्मको सामान्य पाठक, पूजा-आजा गर्ने, प्रवचन दिने देखि लिएर नेपालका विश्वविद्यालयमा बौद्ध अध्ययन विषयका शिक्षक तथा विद्यार्थीहरु सबैलाई उपयुक्त हुने छ ।

यस प्रस्तावलाई केहि दिन पछि परिवारका सवै सदस्यहरुको सहमति भएको कुरा सरला दिदिले वताउनु भयो र चाँडो अनुवाद कार्य थाल्न घच्घच्याउनु भयो । अनि भन्नु भयो, नरेश ! यो किताब बुवा-आमा दुवैको नाममा प्रकाशन गर्ने र धर्मदान गर्ने ।

वहाँको आमा श्रीमती शिद्धि कुमारी बज्राचार्य मेरो सानीमा, मलाई असाध्यै माया गर्नु हुने, जुन दिन देखि मैले पुरोहितको कार्य थालेथें त्यहि दिन देखि मेरी सानीमाले मलाई "गुरुजु" भनेर बोलाउनु हुन्थ्यो । मेरी सानीमा जसलाई म "चिमां" भनेर बोलाउँन्थें । वहाँ एक सहृदयी, ममतामयी, हँसिलो मुहारकी हुनु हुन्थ्यो । मेरो प्रगतिको कामना गर्नु हुन्थ्यो । तर मैले प्रगति गरेर देखाउनु अगाडि नै वहाँको असामयीक निधन भयो । मलाई याद छ वहाँको निधनको तेश्रौं दिन मैले आफैले वहाँको सुगति प्राप्तिको लागि रजमण्डल "दूर्गतिपरिशोधनमण्डल" लेखेथें र वहाँलाई सम्झी सम्झी भाव विभोर भएर म निकै रोएथें । कति जनाले मलाई नरुन सम्झाउनु भएका थिए, पछि चाल

पाएको थिएं कि म त निकै रोएथें, अनि मन-मनले प्रण गरें अब कदापि त्यसरि रुन्दिन । त्यसपछि साँच्चै मेरो बुबाको निधनमा पनि म त्यति विह्वलित भएर रोएँन होला जति सानीमाको निधनमा रोएको थिएँ ।

यो धर्मसंग्रह कोशको मेरो नेपाली अनुवाद वहाँ चिमां (सानीमां) र हेम बालाई वहाँहरुको गुणानुस्मृति गर्दै श्रद्धा सुमन स्वरुप समर्पण गर्दछु ।

अनुवाद कार्यमा मिहेनत गरि सहयोग गर्ने शिष्य तथा सहकर्मी त्रिभुवन विश्वविद्यालय, बौद्ध अध्ययन केन्द्रीय विभागका शिक्षण सहायक श्री पुष्प रत्न शाक्यको उत्तरोत्तर प्रगति, सुख, समृद्धिको कामना गर्दछु ।

यस पुस्तक अनुवाद गर्न प्रोत्साहन तथा प्रकाशन गरि दिनु भएका मेरी सानी आमा सानो बुबाका सन्तान सम्पूर्ण दिदि-दाई-बहिनी सपरिवारलाई हार्दिक धन्यवाद दिन्दछु ।

पुस्तकलाई मूर्त रुप दिने संकटा प्रिन्टिङ्ग प्रेसका सहयोगी साथी नवीन बज्राचार्यलाई पनि धन्यवाद दिन्दछु ।

अनुवादक

# भूमिका

एउटै शब्दको धेरै अर्थ लाग्नु समृद्ध भाषाको लक्षण हो। कुनै शब्दको अर्थ लगाउँदा पदार्थ भावार्थ, विशेषार्थ, प्राविधिक अर्थ, प्रतीकार्थ जस्ता अनेकौं अर्थ लाग्न सक्दछन्। कुनै धर्म (Religion) संग सबन्धित शब्दको अर्थ लगाउँदा त त्यस धर्म, दर्शन, इतिहास, प्रसंग, स्थान, समय आदिलाई ध्यानमा राख्नु पर्ने हुन्छ। त्यसैले धर्मसंग सम्बन्धित शब्दको शास्त्रीय अर्थ (The meaning based on the particular religion, philosophy, literature etc.) बुझ्न जरुरी हुन्छ। अर्थात् कुनैपनि धर्मसंग सम्बन्धित शब्दको अर्थ लगाउन तद् धर्मसंग सम्बन्धित शास्त्रको आधारमा अर्थ लगाउनु पर्ने हुन्छ।

उदाहरणको लागि "धर्म" शब्दलाई नै लिउँ, "धर्म" शब्द एक संस्कृत शब्द हो तर अर्थ अनेक लागदछन्। साधारणतया देव-देवीको पूजा, दान आदि परोपकारी कार्य, पूण्य आर्जन हुने कुनैपनि कार्यलाई "धर्म" भन्ने चलन छ।

त्यस्तै व्यक्ति विशेषद्वारा प्रतिपादित सिद्धान्त र तदनुसारको आचरण-अभ्यासलाई पनि धर्म भन्ने गर्दछन्। जस्तो कि बुद्धद्वारा प्रतिपादित सिद्धान्त र तदनुरुप आचरण-अभ्यासलाई बुद्ध धर्म वा बौद्ध धर्म भन्ने गरेको छ। एवंरितले हिन्दू धर्म, जैन धर्म, क्रिश्चियन धर्म आदिको अर्थ बुझ्न सकिन्छ।

कर्तव्यलाई पनि धर्म भन्ने एक प्रसिद्ध प्रचलन छ। जस्तो कि आमा-बाबुको धर्म सन्तानलाई राम्ररि हुर्काउनु, शिक्षा-दीक्षा दिनु, त्यस्तै सन्तानको धर्म आमा-बाबुको आज्ञा मान्नु, बृद्ध आमा-बाबुको लालन-पालन गर्नु आदि।

पूर्वीयदर्शन शास्त्रमा विशेष गरेर तत्व र तत्वको स्वभावलाइ धर्म भन्ने परम्परा छ । जस्तो पानी एक "तत्व" भएकोले धर्म हो भने पानीको स्वभाव "शीतलता" पनि पानीको धर्म हो ।

बौद्धधर्ममा धर्मका अर्थ उपरोक्त अर्थको अतिरिक्त भिन्न भिन्न सन्दर्भमा भिन्न भिन्न अर्थ लाग्ने गर्दछन् । जस्तै त्रिरत्न अर्थात् बुद्ध, धर्म र संघ रत्नको सन्दर्भमा धर्मको अर्थ "बुद्धवचन" भन्ने अर्थ लाग्दछ । "ये धर्मा हेतु प्रभवा ........." भन्ने प्रसिद्ध गाथामा धर्मको अर्थ हेतुद्वारा उत्पन्न हुने र निरोध पनि हुने सम्पूर्ण भौतिक तथा चित्त-चैतसिक तत्वहरु हुन् । अभिधर्म (पिटक) का सन्दर्भमा धर्मको अर्थ अस्तित्वमा रहेका वा स्वभाव भएका मानिने भौतिक देखि चित्त-चैतसिक तत्वहरु र निर्वाण समेटलाई जनाउँदछन् । माध्यमिक दर्शन अनुसार सम्पूर्ण वस्तुका स्वभाव (आफ्नोपन) नभएकोले ती सम्पूर्ण वस्तुहरु निःस्वभावका छन्, अर्को शव्दमा शून्यता हुन् । त्यसैले धर्म नै शून्यता हो, शुन्यता नै धर्म हो ।

नागार्जुन पादद्वारा संग्रहित "धर्म संग्रहः" नामको ग्रन्थलाई विश्लेषण गरि हेर्दा भौतिक तथा चित्त-चैतसिक तत्वहरुलाई धर्म शब्दले संग्रहित गरेको छ भने निःस्वभावता वोधक शून्यतालाई समेत धर्म शब्दबाट नै गणना गरेको छ । त्रिरत्न अर्थात् वुद्धहरु, बुद्धका शारिरीक तथा आध्यात्मिक गुणहरु, सम्पूर्ण वुद्धवचन, क्लशेक्षय गर्न लागि परेका र क्लेशक्षय हुँदै गएका पुद्गलदेखि वोधिसत्वहरु साथै लोकपाल देवताहरु समेतलाई धर्म शब्द नै प्रयोग गरेका छन् ।

वुँदागत रुपमा भन्नु पर्दा नागार्जुनपादले आफ्नो ग्रन्थ "धर्मसंग्रहः"मा निम्न लिखित तत्वहरुलाई "धर्म" शब्दबाट संग्रह गरेका छन् :-

क. श्रावकयान बौद्ध दार्शनिक अर्थात् अभिधर्मसंग सम्बन्धित भौतिक तथा चित्त-चैतसिक तत्व बुझाउने शब्दहरु

ख. महायानको पारमितानय र मन्त्रनयसंग सम्बन्धित शब्दहरु

ग. सर्वास्तिवादका अनुसार असंस्कृत धर्म (तत्व) लाई बुझाउने शब्दहरु

घ. माध्यमिक दर्शन अनुसार शून्यतालाई बुझाउने विविध प्रकारका शून्यताहरु

ङ. बुद्ध, धर्म र संघ (बोधिसत्वहरु समेत)

छोटकरीमा भन्नु पर्दा बौद्धधर्मका अन्य ग्रन्थमा भन्दा नागार्जुन पादले "धर्म संग्रह"[1] मा धर्मको वृहत् अर्थ दिनु भएको छ।

उहि धर्म संग्रहलाई एकमात्र श्रोतका रुपमा प्रयोग गरि पूज्य गुरु पं.दीव्यबज्र बज्राचार्यज्यूले सम्पादन[2] गर्नु भएको "धर्मसंग्रह कोश" नामको ग्रन्थ वि.सं. २०३६ सालमा स्व.पं.

---

१. धर्मसंग्रहः ग्रन्थको परिचयको लागि दृष्टव्यः
नरेश मान बज्राचार्य, (सं.), वद्रीरत्नकृतभाष्योपेतः नागार्जुनपादविरचित-धर्मसंग्रहः, (काठमाडौं : त्रिरत्न प्रकाशन, २०६२) भूमिका

२. पं. दिव्यवज्र बज्राचार्यज्यूले आफूलाई धर्मसंग्रह कोशको सम्पादक मात्रै भनि उल्लेख गर्नु भएतापनि वहाँलाई कम्तीमा अन्वेषक तथा सम्पादक भन्नु उपयुक्त हुनेछ। किनकि वहाँले धर्मसंग्रहमा उल्लेखित केहि शब्दहरुका शास्त्रीय अर्थको अन्वेषण गर्नु भएको छ र बौद्धशास्त्रहरुको आधारमा अर्थ संकलन गर्नु भई नेपालभाषामा अर्थ लेख्नु भयो र सम्पादन पनि गर्नु भएको स्पष्ट छ। पं. दिव्यवज्र बज्राचार्यज्यूको जीवनीको लागि द्रस्टव्यः सुमति बज्राचार्य, बुद्ध बोधि,
*हाम्रा श्रद्धेय वैद्य स्वर्गीय पण्डित दिव्यवज्र बज्राचार्यका गुणानुस्मरण,*
काठमाण्डौ : दिव्य केशरी परिवार, २०६३

अमोघबज्र बज्राचार्यको स्मृतिमा वहाँका सुपुत्र श्री हेमबज्र बज्राचार्यद्वारा प्रकाशित भएको थियो ।

सो ग्रन्थमा बौद्धधर्मसंग सम्बन्धित जम्मा ३४९ शब्दहरु जुन संस्कृत शब्दहरु हुन् तिनका अर्थ र कुनै कुनै शब्दहरुका व्याख्या पनि नेपालभाषामा दिनु भएको छ । तसर्थ धर्मसंग्रह कोश बौद्ध धर्मसंग सम्बन्धित शब्दहरुको एक संग्रह मात्रै नभई बौद्ध धर्मसंग सम्बन्धित विशेष शब्दहरुको एक बौद्ध शब्दकोश (A Buddhist Dictionary) हो ।

वहाँले नागार्जुनपादको "धर्मसंग्रहः" ग्रन्थमा भएका वुद्धका द्वात्रिंशत् लक्षण, अशीत्यनुव्यञ्जन, देव-देवीहरुलाई छोडि बाँकि शब्दहरुलाई अकारादि क्रमले राखि ती शब्दहरुका अर्थ बौद्ध महायानी मूल ग्रन्थ र टीका ग्रन्थबाट उद्धरण गरि "धर्मसंग्रह कोश" निर्माण गर्नु भएको कुरा ग्रन्थको परिचय दिने क्रममा उल्लेख गर्नु भएको छ ।

वशुबन्धुको अभिधर्म कोष तथा विज्ञप्तिमात्रता शिद्धि र हरिभद्रको प्रज्ञापारमिता महाटीका आलोकमा भएका शब्दहरुको संग्रह गरि नागार्जुनले धर्मसंग्रह रचना गर्नु भएको हुन सक्दछ भन्ने पं.दीव्यबज्र बज्राचार्यज्यूको भनाई छ । धर्मसंग्रहमा वज्रयानी देव-देवी (बुद्ध, वोधिसत्व, लोकपाल आदि) हरुका समेट नाम संग्रह भएका कारणले ग्रन्थका रचनाकार नागार्जुनपाद पक्कै पनि मध्यमक शास्त्र रचना गर्नु हुने आचार्य नागार्जुन भन्दा पछिका समयका व्यक्ति हुन सक्ने तर्क पनि दिनु भएको छ ।

धर्मसंग्रह कोशको प्रकाशन पछि नेपालभाषा बुझ्ने पाठक, अनुसन्धानकर्ता, लेखकहरुलाई बौद्धधर्म दर्शन सम्बन्धी शब्दहरुका शास्त्रीय अर्थ बुझ्न धेरै सहयोग पुग्न गएको तथ्यमा द्विमत नहोला । तर नेपालभाषा नबुझ्ने नेपालीहरु जो बौद्ध धर्म-दर्शन जान्न बुझ्न उत्सुक हुनु

भएका वहाँहरू उक्त ग्रन्थबाट लाभान्वित हुन सकेका छैन। वहाँहरुका लागि धर्मसंग्रहकोष नेपाली भाषामा उपलब्ध हुन सके हुन्थ्यो भन्ने शोच मलाई लागिरहेको थियो, त्यस्तै अरुहरुलाई पनि लागेकै होलान् भन्ने अनुमान लगाउन सकिन्छ।

नेपालभित्र पनि विभिन्न विश्वविद्यालय अन्तर्गत बौद्ध अध्ययन विषय पठन-पाठन एवं अनुसन्धान भई रहेका कारणले पनि तद् विषय सम्बन्धी पाठ्य सामग्रीहरू नेपाली भाषामै उपलब्ध हुन सकेमा पाठ्य सामग्रीको अभावको परिपूर्ति हुँदै जाने तथ्य पनि छँदै थियो।

यस्ता धेरै कुराहरुलाई चिन्तन मनन् गरि धर्मसंग्रह कोशलाई नेपाली भाषामा अनुवाद गर्ने शोच गरे अनुसार आज यस धर्मसंग्रह कोष नेपाली भाषामा अनुवाद गर्ने कार्य भएको छ।

अनुवाद कार्य गर्दा निम्नलिखित शैद्धान्तिक कुराहरुलाई ध्यानमा राखिएका छन् :

१. मूल लेखकको मौलिकतालाई यथाशक्य यथावत राख्ने
२. पदानुवाद मात्रै गर्ने
३. मूल शब्दलाई उच्च स्थान दिने (high light गर्ने)।
४. अनुवादकद्वारा कारणवश थपिएका शब्दहरुलाई सहजरुपमा चिन्न सक्ने गरि भिन्न शैली (style) को अक्षर तथा कोष्ठ प्रयोग गर्ने।
५. आवश्यक स्थानमा मात्रै सकेसम्म कम शब्द प्रयोग गरि अर्थ-भाव स्पष्ट पार्ने।
६. भाषिक शुद्धतालाई ध्यानमा राख्ने।
७. श्रोतलाई पृष्ठको पादमा राख्ने।
८. कोष्ठ प्रयोगमा एकरुपता ल्याउने।
९. क्रम संख्या दिने आदि।

प्रयोगात्मक रुपमा भन्नु पर्दा निम्न पद्धति अपनाई अनुवाद गरिएका छन् ।

१. लेखकद्वारा कुनै कुनै शब्दका अर्थ संस्कृतमूलपाठलाई उद्धरण गरि कहिं ( ) र कहिं [ ] यस्तो कोष्ठभित्र राखिएकोमा कोष्ठ हताई मोटो (Bold) र ढल्केका अक्षर *(Italic)* बनाई राखिदिएको छु ।

२. लेखकद्वारा कुनै कुनै शब्दका अर्थ कहिं ( ) र कहिं [ ] यस्तो कोष्ठभित्र राखिएकालाई एकरुपता ल्याउन ( ) यस्तो कोष्ठमात्र प्रयोग गरि राखि दिएको छु ।

३. लेखकद्वारा शब्दको पछाडि कोष्ठभित्र राखिएका क्रमसंख्यालाई कोष्ठ हताई क्रमसंख्या शब्दको अगाडि राखिदिएको छु ।

४. भाषिक दृष्टिकोणले नपुग शब्द तथा वाक्यहरु ढल्किएका अक्षरमा *( )* कोष्ठभित्र राखिदिएको छु ।

५. लेखकद्वारा प्रयोग गरिएका यस्तो " " चिन्ह भित्रको मूल शब्दलाई मोटो अक्षर (bold) बनाई सो चिन्ह हताई दिएको छु ।

६. लेखकद्वारा कहिं कहिं शब्द वा वाक्य लगत्तै सन्दर्भ ग्रन्थका नाउँ र पृष्ठ संख्या दिइएकालाई सम्बन्धित पृष्ठका पादमा राखि दिएको छु ।

यति अनुवादका पद्धति अपनाउँदा अपनाउँदैमा पनि नेपाली भाषा मेरो मातृभाषा एवं बोलिचालिको भाषा नभएका कारण भाषिक अशुद्धता रहनेमा मलाई शंका छैन ।

अनुवादक

रत्नत्रयं नमस्कृत्य सर्वसत्वहितोदयम् ।
कथ्यते मोहनाशाय धर्मसारसमुच्चयः ॥

*(सबै प्राणिहरुका हितका लागि उदय हुनु भएका त्रिरत्नलाई नमस्कार गर्दै (प्राणिहरुको) मोह नाश गर्न धर्म (तत्व) हरुको सार समुच्चय भनिन्छ ।*

# धर्मसंग्रह कोश

## १. अकुशलमूल

लोभ, द्वेष *(र)* मोह यी तीन कुरालाई अकुशलमूल (पापका जरा वा कारण) भन्दछ ।

## २. अक्षण

प्रतिकूल समय वा अवस्था *(अक्षणको सामान्य अर्थ हो)*। बुद्धद्वारा उपदेशित धर्म वा निर्वाणलाई साक्षात्कार गर्न नसकिने अवस्थालाई अक्षण भन्दछ । *(धर्म वा निर्वाणलाई साक्षात्कार गर्न नसक्ने अवस्थाहरु आठ वटा छन्)* । यी *(निम्नलिखित)* आठ *(समूह)* ले बुद्धको ज्ञान लाभ गर्न क्षण मौका छैन । त्यसैले यस्ता *(प्राणिहरु)* लाई अष्टाक्षणदोषयुक्त *(प्राणि)* भन्दछन् ।

१. नरक*(लोक)मा* बस्नेहरुले
२. पशुपंछिहरुले *(तिर्यग्लोकमा बस्नेहरुले)*
३. प्रेतलोकमा बस्नेहरुले
४. म्लेक्षदेशमा बस्नेहरुले
५. दीर्घायुदेवपुत्रहरुले (असंज्ञिकसत्वहरुले) *(देवलोकमा बस्नेहरुले)*
६. आँखाआदि *(इन्द्रिय)* नहुनेहरुले

७. पाप-पुण्यको फल छैन भन्नेहरुले

८. धर्मचित्त उत्पन्न नभएकाहरुले

## ३. अत्यन्त शून्यता

प्रज्ञापारमिता ग्रन्थमा कतै सोह्र *(शून्यता)* उल्लेख छन्, कतै अट्ठारवटा र कतै बीस प्रकारका शून्यता उल्लेख छन् ।

## ४. अदत्तादान

अदत्त (नदिइकन) आदान (लिने) *(अर्थात्)* नदिइकन लुटेर, चोरेर अर्काको वस्तु वा धन लिनेलाई अदत्तादान भन्दछ । यो शरीरद्वारा गरिने *(तीनवटा)* अकुशल मध्ये एक हो ।

## ५. अद्वेष

*सत्वेषु दुःखे दुःख स्थानीयेषु च धर्मेष्वानाघातोऽद्वेषः ।*

प्राणिहरुको दुःखमा वा दुःख हुने विषयमा आघात नगर्नु अद्वेष हो अर्थात् द्वेष नगर्नु नै अद्वेष हो ।

## ६. अधिमुक्तिचर्या भूमि

संसारमा *(भएका)* सबै पदार्थहरुको ज्ञान प्राप्तगर्ने लाई धर्मप्रविचय भन्दछ । धर्मप्रविचय भइसके पछि चित्त एकाग्र गरि सबै पदार्थहरु आत्मारहित रहेछन् भनेर भावना गर्दागर्दै क्रमशः वाह्य पदार्थ छ भन्ने धारणा छोड्न सक्यो कि भावना गर्ने व्यक्तिमा यो संसार केवल मनको रचना मात्रै रहेछ भन्ने केहि समाधि उत्पन्न हुन्छ । यस अवस्थालाई उष्मगत अवस्था भन्दछ, आलोक समाधि पनि भन्दछ ।

उहि आलोक समाधिद्वारा नैरात्म्य (आत्मा छैन) भन्ने दृढ भावना गरेर दृढ उत्साहद्वारा मध्यम समाधि लाभ हुन्छ । यस

अवस्थालाई बृद्धालोक समाधि (आलोक वृद्धि भएको समाधि) भन्दछ। *(यसलाई)* मूर्धावस्था (शिर वा माथि पुगेको अवस्था) पनि भन्दछ।

यसरि चित्तमात्र छ, बाह्य पदार्थ केहि छैन भन्ने जव अतिस्पष्ट हुन्छ उक्त अवस्थालाई तत्वार्थैकदेश प्रविष्ट समाधि (निर्वाणको एक अङ्ग देखिने समाधि) भन्दछन्।

त्यसपछि बाह्यपदार्थ पनि केहि छैन भन्ने ज्ञान गर्ने मन *(इन्द्रिय)* पनि छैन भन्ने ज्ञानालोक जव उत्पन्न हुन्छ, उक्त अवस्थालाई लोकिकाग्र धर्मावस्था भन्दछ, आनन्तर्य समाधि पनि भन्दछ। यी चार अवस्थालाई दृढ विश्वास *(तथा)* दृढ निश्चय गर्ने भूमि *(मानसिक अवस्था एवं ज्ञानको तह)* नै अधिमुक्तिचर्या भूमि हो।[१]

## ७. अधिमोक्ष

*निश्चिते वस्तुनि तथैवाऽवधारणमधिमोक्षः।* [२]

निश्चित वस्तुलाई निश्चित रुपले निर्णय गर्नुलाई अधिमोक्ष (दृढ निश्चय) भन्दछ।

## ८. अध्यात्म शून्यता

शरीरमा रहेका नाक, कान आदि आन्तरिक पदार्थहरु शून्य हुन् भनि भावना गर्नुलाई अध्यात्म शून्यता भन्दछ। (विशेष अर्थ शून्यता शब्दमा हेर्नु होला)।

---

[१] पि एल वैद्य (स.), अष्टसाहस्रिका प्रज्ञापारमिता (दरभंगा मिथिला विद्यापीठ, १९६०), पृ ३०१

[२] ; , विज्ञप्तिमात्रतासिद्धि ( ; : ; ), पृ ३१

## ९. अध्यात्मबहिर्धाशून्यता

अध्यात्म वस्तु पनि (*इन्द्रिय आदि शरीर*) शून्य *(र)* शरीरदेखि बाहिरका सम्पूर्ण वस्तुपनि शून्य ठान्नुलाई अध्यात्मबहिर्धा शून्यता भन्दछ । (विशेष अर्थ शून्यता शब्दमा हेर्नु होला) ।

## १०. अध्व

बौद्ध साहित्यमा अध्वशब्दको अर्थ काल, समय भनेर प्रयोग गरि राखेको छ । अतीतोऽध्वा (भूतकाल) अनागतोऽध्वा (भविष्यतकाल) प्रत्युत्पन्ना अध्वा (वर्तमानकाल) यस हिसावले तीन वटा काल छन् ।

## ११. अनपत्रपा

*परतोऽनवद्येनाऽलज्जा अनपत्रपा ।*

अरु देखेर लज्जा र भय नलिई पापकर्म गर्नु नै अनपत्रपा हो ।[३]

## १२. अनवराग्र शून्यता

*आदिमध्यपर्यवमानानां तैः शून्यत्वेन अनवराग्रशून्यता ।* [४]

कुनै वस्तुको टुप्पोको तुप्पो भन्ने हुँदैन, वीच *(भाग)* को मध्य हुँदैन पिंधको पिंध हुँदैन अर्थात् आदिको आदि हुँदैन, मध्यको मध्य हुँदैन *(र)* अन्त्यको अन्त्य हुँदैन भनेर भावना गर्नुलाई अनवरावग्र शून्यता भन्दछ । विशेष अर्थ शून्यता शव्दमा हेर्नु होला ।

---

[३]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ २९

[४]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ३१५

## १३. अनवकार शून्यता

*अवकिरणच्छोरणोत्सर्ग लक्षणस्य अवकारस्य विपर्ययेण अनवकार:, तस्य तेन शून्यत्वादनवकार शून्यता ।*[१]

छोड्नु, छर्नु *(र)* त्याग गर्नुलाई अवकार भन्दछ । नछोड्नुलाई अनवकार भन्दछ । अनवकारमा अनवकार छैन अर्थात् नछोड्नेमा नछोड्ने छैन भनेर भावना गर्नुलाई अनवकारशून्यता भन्दछ । विशेष अर्थ शून्यता शव्दमा हेर्नु होला ।

## १४. अनित्य

बुद्धले संसारमा सबै वस्तु बिग्रेर जाने, नास भएर जाने, परिवर्तन भएर जाने भएकाले सबै वस्तु अनित्य भनेर भन्नु भयो । अन्य दर्शनमा पनि अनित्य भनेतापनि आत्मालाई मानेर आत्मा अनित्य भनेको छैन । *(बुद्धले)* चाहेको वस्तु नित्य नभएकोले नै संस्कार *(उत्पत्ति)* भएर भई राखेका वस्तु दु:खमय रहेछ भनि देख्नु भयो । सर्वशक्तिमान आत्मा, परमात्मा हुंदो हो त आफै आफले दु:ख भोग्न अनित्य वस्तु संस्कार (उत्पत्ति) गर्दैन हाला । त्यसैले अनात्मा (आत्मा छैन) भनेर ज्ञान प्राप्त गर्नु भयो । उहि अनित्य, दु:ख र अनात्मालाई त्रिलक्षण भन्दछ ।

## १५. अनित्यता

मरेर जाने (र) बिग्रेर जानेलाई अनित्यता भन्दछ । यो विपश्यनाको विषय हो ।

---

[१] पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ३१५

## १६. अनात्म

रुप आदि ज्ञान दिने पाँचवटा विज्ञान (मन) *(र)* मनन गर्ने मनोविज्ञान (मन) गरेर विज्ञानस्कन्ध, अनुभव गर्ने वेदनास्कन्ध, अनेक प्रकारका मानसिक भावना संस्कारस्कन्ध, निमित्त ग्रहण गर्ने मन संज्ञास्कन्ध *(र)* पृथ्वी आदि रुपस्कन्ध यी पाँचवटा स्कन्धहरु बाहेक आत्मा *(भन्ने)* छैन । आत्मा नभएतापनि मृत्युको अवस्थामा तीब्र रुपमा दु:ख हुने हुनाले सो दु:खले हाम्रो होस *(र)* ज्ञान हराएर जान्छ, मोह रुपी अविद्या र पहिले पहिले गरि आएका तृष्णा र कर्म बृद्धि भएर आउँछन् अनि सोहि अविद्याले (मोहले) संस्कार (राम्रो नराम्रो कर्म) बन्दछ । यहि संस्कारले विज्ञान (प्रतिसन्धि चित्त) उत्पन्न हुन्छ अनि अरु ठाउँका जन्म लिन जान्छ । आत्माले जन्म लिन जाने होईन । आत्मा छैन भनि *(बुद्धले)* प्रतीत्यसमुत्पाद (भवचक्र) प्रवर्तन गर्नु भएको हो ।

## १७. अनुपलम्भ शून्यता

अतीतादि कालको वस्तु अतीतादि कालमा उपलब्ध हुदैन भनेर भावना गर्नुलाई अनुलपलम्भ शून्यता भन्दछ । *(विशेष)* अर्थ शून्यता शब्दमा हेर्नु होला ।

## १८. अपत्रपा

*लोकमधिपतिं कृत्वाऽवद्येन लज्जाऽपत्रपा ।*

लोकले के भन्छ भनेर पाप गर्न डराउने वा लाज लाग्नेलाई कुशल अपत्रपा भन्दछ ।

## १९. अप्रमाद

*रागादिक्लेशाच्चित्तरक्षणं कुशलभावनञ्चाऽप्रमादः ।*

रागादि क्लेशले चित्त(लाई) छेक्न र कुशल धर्म भावना गर्नुलाई अप्रमाद भन्दछ । अर्थात् लोभ, मोह (र) द्वेष आदि छोडेर कुशल भावना गर्नुमा गल्ति नगर्नु अप्रमाद हो ।

## २०. अप्राप्ति

लाभ नभएको ध्यान आदिलाई अप्राप्ति भन्दछ ।

## २१. अप्रतिसंख्या निरोध

चक्षु विज्ञान(मन)ले रुप ज्ञान गरि रहने वेलामा छालाले स्पर्श ज्ञान लिन सक्दैन । त्यसवेला स्पर्श निरोध भई रहन्छ । त्यस प्रकारको निरोधलाई अप्रतिसंख्या निरोध भन्दछ ।

## २२. अभाव शून्यता

*अभावस्यासंस्कृतस्य आकाशादेः तेन शून्यत्वाद् अभाव शून्यता ।*

आकाश आदि असंस्कृत पदार्थमा आकाश आदि शुन्य भनेर भावना गर्नुलाई अभाव शून्यता भन्दछ । विशेष कुरा शून्यता शव्दमा हेर्नु होला ।

## २३. अभाव स्वभाव शून्यता

*नास्ति सांयोगिकस्य धर्मस्य स्वभाव प्रतीत्यसमुत्पन्नत्वाद्, इति संयोगस्य तेन शून्यत्वाद् अभाव स्वभावशून्यता सामग्री मात्रं भावः इति कृत्वा ।*[६]

---

६ पूर्व पाद टिप्पणी सङ्ख्या१. पृ ३१५

सयोग भई बनेको वस्तुको आफ्नो अस्तित्व छैन । त्यसैले सयोगको संयोग छैन भनेर भावना गर्नुलाई अभाव स्वभाव शून्यता भन्दछ । विशेष कुरा शुन्यता शब्दमा हेर्नु होला ।

## २४. अब्याकृत वस्तु

भगवान् बुद्धले १४ वटा कुराहरुका ब्याकरण (ब्याख्यान्) गर्नु भएन । त्यस्ता कुराहरुलाई अब्याकृत वस्तु भन्दछ । *(ती हुन्)*

१. यो लोक नित्य छ ।
२. यो लोक नित्य छैन ।
३. यो लोक नित्य पनि छ, अनित्य पनि छैन ।
४. यो लोक नित्य पनि छैन, अनित्य पनि छैन ।
५. यो लोकको अन्त्य छ ।
६. यो लोकको अन्त्य छैन ।
७. यो लोकको अन्त्य पनि छ, अन्त्य पनि छैन ।
८. यो लोकको न अन्त्य छ, न अन्त्य छैन ।
९. तथागतको मरण पछि पनि *(अस्तित्व)* हुन्छ ।
१०. तथागतको मरण पछि *(अस्तित्व)* हुँदैन ।
११. मरण भए पछि तथागत हुन पनि सक्छ, नहुनपनि सक्छ ।
१२. मरणपछि तथागत हुँदै हुँदैन, नभएको पनि हुँदैन ।
१३. जीव र शरीर एकै हुन् ।
१४. जीव र शरीर अलग अलग हुन् ।

## २५. अश्रद्धा

*कर्मफलसत्यरत्नेष्वनभिसंप्रत्ययो;श्रद्धा ।*[७]

पाप पुण्यको फलमा, चतुरार्यसत्यमा (र) त्रिरत्नमा विश्वास-पत्यार नगर्नुलाई अश्रद्धा भन्दछ । यसै अश्रद्धाको कारणले पुण्य कर्ममा प्रसन्नता नआउने हो । यसैले गर्दा कुशल कर्म गर्नमा उत्साह हीन भएर जाने हो ।

## २६. अष्ट पर्वत

युगंधर, ईषधर, खरिदक, सुदर्शन, अश्वकर्ण, विनतक, नेमिंधर *(र)* सुमेरु यी आठवटा *(पर्वत)* लाई अष्ट पर्वत भन्दछ । युगंधर आदि सातवटा पर्वतहरुले सुमेरु पर्वतलाई घेरि राखेका छन् भनि बौद्ध साहित्यमा उल्लेख छ ।

## २७. अष्ट पुद्गल

चारवटा फल प्राप्त भइ सकेका र चारवटा फल प्राप्त गर्ने मार्गमा हिंडिरहेकाहरुका भेदले पुद्गल (व्यक्ति) आठप्रकारका ती अष्ट पुद्गल निम्नानुसारका हुन् ।

१. स्रोतआपन्नफलप्रतिपन्नक
२. स्रोत आपन्न
३. सकृदागामिफलप्रतिपन्नक
४. सकृदागामि
५. अनागामिफलप्रतिपन्नक
६. अनागामि
७. अर्हतफलप्रतिपन्नक
८. अर्हत्

---

[७]. पूर्व पाद टिप्पणी संख्या २, पृ. ३९.

यानको भेदले *(पुद्गल कति प्रकारका छन् भन्ने कुरा)* प्रतिपुद्गल शब्दमा हेर्नु होला ।

## २८. अष्टलोकधर्म

लाभ, अलाभ, सुख, दु:ख, यश, अयश, निन्दा *(र)* प्रशंसा यी आठवटा लोकधर्म (लोकले बिचार गर्ने विषय) *(लाई अष्ट लोकधर्म)* भन्दछ ।

## २९. अष्ट विमोक्ष

१. रुपी रुपाणि पश्यति ।
२. अध्यात्मं रुपसंज्ञी बहिर्धा रुपाणि पश्यति ।
३. शुभविमोक्षं कायेन साक्षात्कृत्वोपसंपद्य विहरति ।
४. आकाशानन्त्यायतनं पश्यति ।
५. विज्ञानानन्त्यायतनं पश्यति ।
६. आकिञ्चन्यायतनं पश्यति ।
७. नैवसंज्ञानासंज्ञायतनं पश्यति ।
८. संज्ञावेदयितनिरोधं पश्यति ।

यहाँ रुपावचर चारवटा ध्यान गर्ने व्यक्तिहरुलाई रुपी भनेका हुन् । उनिहरुले पृथ्वी आदिको रुप देख्दछ अर्थात् संपूर्ण पदार्थ पृथ्वी आदि नै *(हुन्)* भनेर भावना गर्दछ ।

*विमुच्यतेऽनेन निर्माणावरणादिति विमोक्ष:।*[८]

यहाँ ऋद्धि विषय निर्माण गर्ने वेलामा आउने बाधाबाट मुक्त हुन सक्ने हुनाले विमोक्ष भनेको हो ।

अध्यात्म (शरीर) लाई अरुप भावना गर्नेले बाहिर भएका वस्तुका रुप देख्दछ । यी दुई विमोक्ष अशुभ भनेर उल्लेख

---

[८]. नथमल टाँटिया म.), अभिधर्म समुच्चयभाष्यम् (पार्टलिपुत्र : काशी प्रसाद जायसवाल, अनुशीलन संस्था, २०३३), पृ.१२४

गरि राखेका छन् । यो प्रथम र द्वितीय ध्यानका विषय हुन् ।[९] तृतीय विमोक्ष शुभ साक्षात्कार गरेर प्राप्त हुने भएकोले चतुर्थ ध्यानको विषय हो । चारवटा आरूप्य र संज्ञावेदित निरोध पनि निर्माणको आवरणले मुक्त गर्ने हुनाले विमोक्ष भनि राखेका छन् । यी आठवटालाई विमोक्ष भनेर उल्लेख गरि राखेको विषयमा ध्यानादिको वितर्क आदि अङ्गले मुक्त भएकोले विमोक्ष भनेको भनेर पनि उल्लेख गरि राखेको छ । मूल ग्रन्थमा आठवटा विमोक्षको पछाडि "पर्य्याप्त शून्य" भनेर शून्य शब्द राखेका छन् । यस हिसावले अस्तित्व छैन भनेर भावना गर्ने संप्रदाय (मत) पनि रहेछ भन्ने देखिन्छ ।

## ३०. अभिध्या

*अभिध्या या परस्वे विषया स्पृहा ।*[१०]

अर्काको धन सम्पत्ति आदि अन्यायपूर्वक लिने इच्छा गर्नु *(लाई अभिध्या भन्दछ ।)*

## ३१. अभिनिवेश

*प्राप्तेषु कामेषु कामाभिषङ्गोऽभिनिवेशः ।*[११]

नजिक *(वर्तमान समयमा)* आएको *(प्राप्त)* सुख *(भौतिक काम अर्थात् सुख)* भोगमा भुलिरहनुलाई अभिनिवेश भन्दछ ।

## ३२. अमोह

*यथाभूतसंप्रतिपत्तिः कर्मफलसत्यरत्नेषु संप्रतिपत्तिश्च अमोहः ।*[१२]

---

९. द्वारिकादास शास्त्री (स.), अभिधर्म कोश, (वाराणसी: बौद्ध भारती, १९८१), पृ ४५५

१०. पूर्व पाद टिप्पणी सङ्ख्या ९, पृ ११२

११. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ४७८

१२. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ३३

यथार्थज्ञान बुझ्नु (अर्थात्) पापपुण्यको फलमा, चतुरार्यसत्यमा (र) त्रिरत्नको बारे यथार्थ ज्ञान राख्नु नै अमोह हो ।

## ३३. अरुपावचरदेवता

आकाशानन्त्यायतनोपग, विज्ञानानन्त्यातनोपग, आकिञ्चन्यायतनोपग (र) नैवसंज्ञानासंज्ञायतनोपग यी चार प्रकारका देवताहरुलाई अरुपावचर देवता भन्दछन् ।

## ३४. अर्थ प्रतिसंविद

*अर्थ प्रतिसंवित्स्वसामान्ये लक्षणे धर्माणाम्, अर्थन्तराद्यभिप्राये चाव्याधातसमृद्धौ ।*

कुनै शव्दको अर्थ दुई(प्रकारको) निस्कँदा (त्यसको) अभिप्राय (भाव) नबिग्रने गरि व्याख्यान् गर्नु र कुनै (एक) वस्तुको लक्षण अर्को वस्तुको लक्षणसंग नबिग्रीने गरि व्याख्यान् गर्ने ज्ञानलाई अर्थ प्रतिसंविद् भन्दछ । यो अर्हत्हरुलाई लाभ हुने ज्ञान हो ।

## ३५. अलोभ

*भवे भवोपकरणेषु चानासक्तिर्वैमुख्यञ्चालोभः ।*[१३]

कामादि भव र भवमा उत्पत्ति गराइ दिने वस्तुमा आसक्ति (चाहना) नगर्नु र (त्यसबाट) विमुख भइ रहनुलाई अलोभ भन्दछ ।

---

[१३]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ३२

३६. अविद्या

ज्ञानविरोधि तत्वलाई अविद्या भन्दछ । त्यसैलाई नै मोह पनि भन्दछ । मिथ्यादृष्टि अविद्या होइन । अविद्यावाट उत्पन्न विचार मात्रै *(मिथ्यादृष्टि)* हो । अविद्यालाई संयोजन, अनुशय, आश्रव, ओघ, *(र)* योग भनेर पनि भन्दछन् । अविद्या ज्ञानको उपक्लेश हो । पूर्वजन्मको क्लेशको अवस्था नै अविद्या हो ।[१४]

३७. अष्टाङ्गिक मार्ग

*(आठ अङ्गहरुले युक्त भएको मार्गलाई अष्टाङ्गिक मार्ग भन्दछन् । ती आठवटा अङ्ग निम्नानुसारका हुन् ।)*

१.सम्यक् दृष्टि
२.सम्यक् संकल्प
३.सम्यक् वाक्
४.सम्यक् कर्मान्त
५.सम्यक् आजीव
६.सम्यक् व्यायाम
७.सम्यक् स्मृति
८.सम्यक् समाधि

यी आठवटा निर्वाण (दु:ख निरोध) लाभ गर्ने उपाय भएकाले यसलाई अष्टाङ्गिक मार्ग आठ अङ्गहरुले युक्त मार्ग भन्दछ ।

३७.१ सम्यक् दृष्टि

पाप *(र)* पुण्यको फल हुन्छ भन्ने विचारलाई सम्यक् दृष्टि भन्दछ । वा चतुरार्य सत्य देख्नु *(लाई)* सम्यक् दृष्टि भन्दछ ।

[१४]. पूर्व पाद टिप्पणी संख्या ९ . ९ ८

३७.२ सम्यक् संकल्प

ससारबाट मुक्त भएर जान पाए हुन्थ्यो, अरु *प्राणिहरु* को नराम्रा *(अवस्था वा दुःख)* हेर्न नपरे हुन्थ्यो *(हेर्न नपरोस् र)* अरुलाई हिंसा गर्ने चित्त उत्पन्न नभए हुन्थ्यो भन्ने संकल्प *(गर्नु लाई)* सम्यक् संकल्प भन्दछ ।

३७.३. सम्यक् वाक्

झुट्ठा नभएका, अर्कालाई झगडा गराउने चुक्ली नभएका, चित्त नदुख्ने, किस्सा-कहानि जस्ता व्यर्थ जाने *(किसिमका)* नभएका कुरालाई *(वचनलाई)* सम्यक् वाक् (राम्रो बोलिवचन) भन्दछ ।

३७.४. सम्यक् कर्मान्त

प्राणि हिंसा नगर्नु, अर्काको वस्तु वा धन चोरी नगर्नु *(र)* अर्काको स्वास्नी वा लोग्नेसंग व्यभिचार नगर्नुलाई सम्यक् कर्मान्त (असल काम) भनेर भन्दछ ।

३७.५. सम्यक् आजीव

शस्त्र, प्राणि, जाँड, रक्सी, मासु *(र)* विष आदि वस्तुहरु बिक्री नगरिकन, छलकपट नगरि अन्य व्यापार आदि गर्नुलाई सम्यक् आजीव (असल जीविका) भनेर भन्दछ ।

३७.६. सम्यक् व्यायाम

*(हालसम्म)* नगरेका पाप *(कहिल्यै)* नगर्न, गरिसकेका पाप नाश गर्न, *(हालसम्म)* नगरेका पुण्य *(कार्य)* गर्न *(र)* गरि सकेका पुण्यलाई स्थिर गर्नका लागि उद्योग, कोशिस *(र)* उत्साह गर्ने *(कार्य)*लाई सम्यक् व्यायाम (राम्रो उत्साह *(तथा)* वीर्य) भन्दछ ।

३७.७. सम्यक् स्मृति

कायानुस्मृति (शरीर बारे सचेत भएर स्मरण*(होस)* गर्नु), वेदनानुस्मृति (सुख-दुःख आदि वेदनाबारे सचेत भई

स्मरण *(होस)* गर्नु), चित्तानुस्मृति (आफ्नो चित्त र संस्कारबारे सचेत भई स्मरण *(होस)* गर्नु) *(र)* धर्मानुस्मृति (कुशल *(र)* अकुशल आदि संसारमा *(भएका)* सबै पदार्थको स्वभाव स्मरण *(होस)* गर्नुलाई सम्यक् स्मृति भन्दछ।

३७.८. सम्यक् समाधि

अनेक प्रकारका मिथ्या समाधि छोडेर बुद्धले बनाउनु भए अनुसार प्रथम आदि ध्यानलाई सम्यक् समाधि भन्दछ।

यसरि भगवान बुद्धले निर्वाण हुने उपाय यो नै अष्टाङ्गिक मार्ग हो भनेर बताउनु भयो। यहि मार्गको व्याख्या स्वरुप त्रिपिटक रचना भयो। *(यस विषयमा)* यहाँ जति लेखे पनि पूर्णरुपले बोध हुन मुश्किल हुन्छ। संक्षिप्त रुपले बुझयो भने विस्तृत रुपले *(पनि)* बुझ्न सजिलो हुन्छ।

## ३८. अष्टादश आवेणिक बुद्ध धर्म

१. तथागतको कुनैपनि कार्यहरुमा दोष हुँदैन।
२. खलबल गर्ने स्वभाव हुँदैन।
३. स्मृति हीन *(र)* लोप हुँदैन।
४. असावधान हुँदैन।
५. नानात्वसंज्ञा (भव निर्माण आदि कल्पना) हुँदैन।
६. अज्ञान *(अज्ञानतावश वहाँ)* द्वारा *(कसैलाई)* उपेक्षा गर्दैन।
७. *(कार्य)* गर्ने इच्छा अपूर्ण हुँदैन।
८. उत्साहहीन हुँदैन।
९. स्मृति हीन हुँदैन।
१०. समाधिहीन हुँदैन।
११. प्रज्ञाको हीनता हुँदैन।
१२. विमुक्ति हानी हुँदैन।
१३. निर्वाणको साक्षात्कारको हानी पनि हुँदैन।

१४. सम्पूर्ण शारीरिक कार्य ज्ञानपूर्वक मात्रै हुन्छ ।

१५. सम्पूर्ण वचन ज्ञानपूर्वक मात्रै हुन्छ ।

१६. सम्पूर्ण मनको कर्म ज्ञानपूर्वक मात्रै हुन्छ ।

१७. भूतकालमा पनि अनासक्त भएको ज्ञानले युक्त हुन्छ।

१८. वर्तमानमा पनि अनासक्त भएको ज्ञानले पूर्ण हुन्छ ।

यति विशेषतालाई बुद्धको आवेणिक (गाँठो नपरेको धर्म) भन्दछ ।

*दशबलादि चत्वारि वैशारद्यानि त्रीणि स्मृत्युपस्थानानि महाकरुणा च असाधारण ह्यावेणिक मित्युच्यते ।*

अभिधर्मकोशको सप्तम कोश स्थान २८ श्लोक अनुसार *(दश बल, चार वैशारद्य, तीन स्मृतिपस्थान र एक महाकरुणालाई बुद्धको असाधारण आवेणिक धर्म भनिन्छन् ।)*

## ३९. अष्टादश धातु

चक्षु, श्रोत्र, घ्राण, जिह्वा, काय, मन, रुप, शब्द, गन्ध, रस, स्पर्श, धर्म, चक्षुविज्ञान, श्रोत्रविज्ञान, घ्राणविज्ञान, जिह्वाविज्ञान, कायविज्ञान र मनोविज्ञान यी १८ वटालाई धातु भन्दछ । यिनीहरुले हाम्रो शरीरलाई धारण गरि राखेको हुनाले नै धातु भनेको हो । यहाँ छ प्रकारका इन्द्रिय*(हरु,)* छ प्रकारका विषय*(हरु र)* छ प्रकार ज्ञान गर्ने मनलाई नै अष्टादश धातु १८ वटा धातु भनेका हुन् ।

## ४०. असंस्कृत धर्म

आकाश, प्रतिसंख्यानिरोध (निर्वाण) *(र)* अप्रतिसंख्या निरोध यी तीन प्रकारका पदार्थलाई असंस्कृत धर्म *(नबनाइएका वस्तु)* भनेर भन्दछ ।[१५]

---

[१५]. पूर्व पाद टिप्पणी सङ्ख्या ९, पृ २

## ४१. असंस्कृत शून्यतां

*असंस्कृततस्यानुत्पादनिरोधानन्यथात्वस्य तेन शून्यत्वादसंस्कृतशून्यता ।*[१६]

उत्पन्न नभएका, निरोध भएका, परिवर्तन नहुने वस्तुलाई असंस्कृत भन्दछन् । असंस्कृत पदार्थमा असंस्कृत स्वभाव छैन भनेर भावना गर्नुलाई असंस्कृत शून्यता भन्दछ । विशेष कुरा शून्यता शब्दमा हेर्नुहोला ।

## ४२. अहंकार ममकार परित्याग

म *(र)* मेरो भन्ने विचार नबनाउने भावनालाई *(अहंकार ममकार परित्याग)* भन्दछ । यस भावनालाई तीन कुशल (कर्म) मा समावेश गरि राखेको छ ।

## ४३. अह्रीकता

*स्वयमवद्येनाऽलज्जाऽह्रीकता ।*

आफूले पाप काम गर्न हरामि भएर लाज नमान्नुलाई अह्रीकता भन्दछ । यसै संस्कार-भावले गर्दा शीलादि कुशल *(कर्म)* नगर्ने हुन्छ ।

## ४४. आकाश

आफूले अर्कालाई नछेक्ने, नछोप्ने (अनावरण स्वभावका) लाई आकाश भन्दछ । यसैलाई असंस्कृत धर्म पनि भन्दछ ।

---

[१६]. पूर्व पाद टिप्पणी सङ्ख्या १. पृ. ३१५

## ४५. आत्म धारणी

बोधिसत्वहरुलाई लाभ हुने चार प्रकारका *(धारणीहरु)* मध्ये एक धारणी *(आत्म धारणी हो ।)* विशेष कुरा ग्रन्थ धारणी शब्दमा हेर्नु होला ।

## ४६. आनन्तर्य समाधि

यो समाधि अधिमुक्ति चर्या गर्ने बोधिसत्वहरुले *(प्राप्त)* गर्ने भनेर उल्लेख गरेको छ । थप अर्थ अधिमुक्ति चर्या शब्दमा हेर्नु होला ।

## ४७. आलम्बन

रुप, शब्द, गन्ध, रस, स्पर्श *(र)* धर्म

यी छ वटालाई आलम्बन *(र)* विषय (गोचर) पनि भन्दछ।

## ४८. आलोक समाधि

यो *(आलोक)* समाधि पनि बोधिसत्वहरुलाई *(प्राप्त हुने समाधि)* भनेर उल्लेख गरि राखेका छन् । *(यस विषयमा)* विशेष कुरा अधिमुक्ति चर्या शब्दमा हेर्नु होला ।

## ४९. आवरण

चित्तलाई छोपी राख्नेलाई आवरण भन्दछ । रागादि क्लेशलाई क्लेशावरण भन्दछ । जान्न लायकका *(अर्थात्)* ज्ञान गर्न लायकका *(ज्ञान)* लाई ज्ञेय भन्दछ । *(सोहि)* ज्ञेयलाई नै ज्ञेयावरण भन्दछ । यस शब्दको वर्णन महायानमा मात्रै पाईन्छ । यसरि आवरण दुई प्रकारका छन् ।

## ५०. आसंज्ञिक समापत्ति

निमित्त ग्रहण गर्ने संज्ञा (सामान्य ज्ञान) नहुने *(संज्ञा उत्पन्न नहुने)* समाधिलाई आसंज्ञिक समापत्ति भन्दछ।

## ५१. आशयशुद्धि

*परोपकारप्रवणचित्तमध्याशय ।*[१७]

परोपकारमा चित्त लगाउनु नै अध्याशय हो । सोहि *(अध्याशयलाई)* शुद्ध रुपले *(अर्थात्)* निस्वार्थ भई भावना गर्नुलाई आशयशुद्धि भन्दछ।

## ५२. ईर्ष्या

*परसंपत्तौ चेतसो व्यारोष ईर्ष्या ।*

अर्काको उन्नति *(रुपी)* सम्पत्ति देखेर सहन नसक्ने *(चित्तको अवस्था)* लाई ईर्ष्या भन्दछ।

## ५३. उपक्लेश

*(मनलाई फोहोर गर्ने वा दुःखित पार्ने तत्वलाई उपक्लेश भन्दछन् ।)* उपक्लेश २४ प्रकारका हुन्छन् । *(ती निम्नानुसारका हुन् ।)*

१. क्रोध (रीस)
२. उपनाह (बदला लिने भावना राख्नु)
३. म्रक्ष (आफ्नो दोषलाई छोप्नु)
४. प्रदास (चित्त दुख्ने गरि वचन बोल्नु)
५. ईर्ष्या (अरुको सुख हेर्न नसक्नु)
६. मात्सर्य (कपति हुनु वा कन्जुस हुनु)

---

[१७]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ४४८

७. शाठ्य (अर्कालाई छलकपट गर्नु)
८. माया (*नभएका शील आदि भए जस्तै व्यवहार गर्नु*)
९. मद (अभिमानले मत्त हुनु)
१०. विहिंसा (अर्काको ज्यान/प्राण लिनु)
११. अह्री (पाप कर्म गर्न लाज शरम नहुनु)
१२. अत्रपा (पापकर्म गर्न नडराउनु)
१३. स्त्यान (अल्छि हुनु)
१४. अश्राद्य (श्रद्धा नहुनु)
१५. कौसीद्य (कुशल कार्यमा उत्साह नहुनु)
१६. प्रमाद (भूल गर्नु)
१७. मुषित स्मृति (होस नराख्नु)
१८. विक्षेप (चित्त खलबल हुने)
१९. औद्धत्य (उद्धत अर्थात् उत्ताउलो हुनु)
२०. असंप्रजन्य (शारिरीक क्रियाकलापमा होस नराख्नु)
२१. कौकृत्य (पश्चाताप हुनु)
२२. मिद्ध (तांद्रा वा निद्रा लाग्नु)
२३. वितर्क (मनमा अनेक तर्क गर्नु)
२४. विचार (विचार गर्नु)।

## ५४. उपनाह

*क्रोधादुर्ध्वं ममानेनेदमकृतमित्यस्य वैरात्मकस्यानुशयस्यानुत्सर्ग उपनाहः ।*[१८]

क्रोध आएपछि *(यसले मेरो)* यो यो नोक्सान गरेका छन् भनेर वैरभाव नछोडिकन बदला भावना लिइ राख्नुलाई उपनाह भन्दछ। यो द्वेषकै अंश हो।

[१८]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ३७

## ५५. उपादान

खाने, पिउने आदि भोग गर्न, प्राप्त गर्न र ग्रहण गर्नको लागि तत्पर हुने चित्तको अवस्था नै उपादन हो । यो तृष्णा *(बाट)* उत्पन्न हुन्छ भनेर प्रतीत्यसमुत्पादमा उल्लेख छ ।

## ५६. उपायास

कसैसंग बिछोड भएपछि मनभित्र दाह हुने *(र)* अपशोच हुनेलाई उपायास भन्दछ । यो पनि प्रतीत्यसमुत्पादमा *(प्राणिहरु)* जन्म हुनासाथै नभई नछोड्ने दुःख*(भनेर)* उल्लेख गरि राखेको छ ।

## ५७. उपेक्षा

*चित्तसमता, चित्तप्रशमता, चित्तानाभोगतोपेक्षाः ।*[१९]

स्त्यान, मिद्ध र औद्धत्य नगरि चित्तलाई समान अवस्थामा राख्नु वा चित्तलाई शान्त भावमा राख्नु तथा चित्तलाई विषयमा नलगाउनुलाई नै उपेक्षा भन्दछ ।

त्यस्तै सुख पनि नभएको दुःखपनि नभएको अवस्था उपेक्षा हो । यस्तैगरि मनपर्नु र मन नपर्नु आदि द्वन्द तत्वको मध्यस्थ हुनु पनि उपेक्षा हो भनेर चतुर्ब्रम्ह विहार भावनामा आउने छ, यो कुरा त्यहाँ पनि हेर्न सक्नु हुनेछ ।

## ५८. उष्ण नरक

संजीव, कालसूत्र, संघाट, रौरव, महारौरव, तपन, प्रतापन *(र)* अवीचि यी आठवटा नरकलाई उष्ण नरक (भट् भट् पोल्ने नरक) भनेर उल्लेख भएको छ ।

---

[१९]. पूर्व पाद टिप्पणी सख्या २. पृ ३४

## ५९. ऋद्धि

*ऋद्धिः समाधिर्गमनं निर्माणं च ।*[२०]

ऋद्धि भनेको समाधि नै हो । जाने *(आउने र)* निर्माण गर्ने भेद अनुसार दुई प्रकारका ऋद्धि पाईन्छन् । बुद्धले आकाशमा उडेर जानु, पानीमा हिंड्नु र माटोलाई सुन बनाउने जस्ता धेरै प्रकारका ऋद्धिहरुको वर्णन गर्नु भएको छ।

## ६०. ऋद्धिपाद

छन्द ऋद्धिपाद, वीर्य ऋद्धिपाद, चित्त ऋद्धिपाद *(र)* मीमांसा ऋद्धिपादको भेदले ऋद्धिपाद चार प्रकारका छन् ।

आकाशमा उडेर जाने आदि धेरै प्रकारका ऋद्धि (समाधि विशेष) छन् । ती ऋद्धिका जरा (मूल कारण) लाई "पाद" भन्दछ । त्यसैले ऋद्धिपाद भनेको ऋद्धिको मूल कारण भनेका हुन् ।

यो कार्य फत्ते गर्दछु भन्ने छन्द (प्रबल ईच्छा गर्नु) लाई प्रधान गरेर लाभ भएको समाधि नै छन्द ऋद्धिपाद हो ।

पूर्वजन्मको पूण्यको कारणले वर्तमान जन्ममा असल चित्तले पनि समाधि लाभ हुन सक्छ । त्यसरी लाभ भएका समाधिलाई चित्त ऋद्धिपाद भन्दछ ।

उत्साह, उद्योग *(र)* जाँगर भइ (वीर्य)लाई प्रधान गरेर लाभ भएको समाधिलाई वीर्य ऋद्धिपाद भन्दछ ।

अध्ययन, विचार, विमर्श (मीमांसा)को कारणले लाभ भएको समाधिलाई मीमांसा ऋद्धिपाद भन्दछ ।

छन्द (कार्य गर्ने प्रबल ईच्छा) चित्त (पूर्व जन्मको पुण्यले शुद्ध भएको मन) वीर्य (अत्यन्त जांगर) *(र)* मीमांसा

---

[२०]. पूर्व पाद टिप्पणी संख्या ९, पृ २१६

(छलफल विचार विमर्श) द्वारा समाधि लाभ हुन्छ भन्ने नै यसका भाव हुन् ।

## ६१. औद्धत्य

*चित्तस्याव्युपशमा औद्धत्यम् ।*[२१]

चित्त शान्त नहुनेलाई *(र)* सावधान नहुनेलाई औद्धत्य भन्दछ । औद्धत्य भएसम्म ध्यान लाभ हुँदैन । यसै *(औद्धत्य भाव)* ले मनमा नानारङ्गका कुरा आइ रहन्छन् ।

## ६२. करुणा

दुःखीहरुको दुःख हरण गर्ने इच्छालाई करुणा भन्दछ । *(यस विषयमा)* विशेष अर्थ चतुब्रम्ह विहार शब्दमा हेर्नु होला ।

## ६३. कर्म

दृष्टधर्म वेदनीयकर्म (यसै जन्ममा पाप *(र)* पुण्यको फल पाउने कर्म), उत्पद्य वेदनीयकर्म (अर्को जन्ममा फल पाउने कर्म) *(र)* अपरपर्याय वेदनीयकर्म (जन्म जन्मान्तरमा फल पाउने कर्म ) यी तीन प्रकारका पाप र पुण्य कर्म छन् ।

## ६४. कायायतन

काय(शरीर) आयतन (स्पर्शहुने अथवा स्थान भएको हुनाले शरीर नै कायायतन हो ।

---

[२१]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ३८

## ६५. कामावचर देवता

चतुर्महाराजकायिक, त्रायत्रिंश, तुषित, याम, निर्माणरति *र* परनिर्मितवशवर्ति यी छ प्रकारका देवताहरुलाई कामावचर देवता भन्दछ ।

## ६६. काममिथ्याचार

अर्काको स्वास्नी अथवा लोग्नेसित संभोग - मैथुन *(गर्नुलाई काममिथ्याचार भन्दछ ।)* यो दश वटा अकुशल कर्म मध्ये एक हो ।

## ६७. कायधातु

शरीर धारण गरेको *(र)* स्पर्श ज्ञान गर्ने इन्द्रियलाई कायधातु भन्दछ ।

## ६८. कायविज्ञान धातु

स्पर्श चाल पाउने मनलाई कायविज्ञान धातु भन्दछ ।

## ६९. कूशलमूल

अद्वेष, अलोभ *(र)* अमोह यी तीनवटालाई कुशलमूल *(अर्थात्)* पुण्यको जरा वा कारण भन्दछ ।

पुनश्च बोधिचित्तोत्पाद, आशय विशुद्धि, अहंकार - ममकार परित्याग यी तीन वटालाई पनि कूशलमूल भनेर उल्लेख गरेको छ । बोधिचित्तोत्पाद पनि दुई प्रकारका छन् । *(ती हुन्)*

बोधिप्रणिधि चित्त र बोधिप्रस्थान चित्त ।

सवै सत्वप्राणिहरुलाई हित, सुख*(र)* उद्धार गर्नको लागि म वुद्ध*(सम्यक् सम्बुद्ध)* हुन सकुं भनि प्रणिधान (प्रतिज्ञा) स्वरुपको चित्तलाई बोधिप्रणिधि चित्त भन्दछ । यो प्रथम

बोधिचित्त हो । त्यसपछि, आफ्नो सम्पूर्ण भौतिक सम्पत्ति त्याग गरेर, गृहस्थीभाव छोडेर शील-संवर आदि नियम ग्रहण गरेर जगतलाई हित सुख *(र)* उद्धार कार्य गर्न लाग्ने द्वितीय *(चित्तलाई)* बोधिप्रस्थान चित्त भन्दछ ।

स्वार्थ नराखी परोपकार कार्यमा चित्त लगाउनेलाई आशय विशुद्धि भन्दछ । म, मेरो भन्ने भाव छोड्नुलाई अहंकार-ममकार परित्याग भन्दछ । यी तीन प्रकारका चित्तले नै कुशलधर्म गर्ने हुनाले यी तीन वटालाई पनि बोधिसत्वहरुले कूशलमूल भनेर वर्णन गरि गरेका हुन् ।

## ७०. कौसिद्य

*कुशले चेतसोऽनुत्सहो कौसिद्यम् ।*[२२]

कुशल कर्म *(गर्ने)* मनमा जागरण नआउनेलाई कौसिद्य भन्दछ ।

## ७१. क्रोध

*वर्तमानमपकारमागम्य चेतस आघातः क्रोधः।*

तत्काल आफूलाई भएको नोक्सान देखेर *(उत्पन्न)* भएको मनको चोटलाई क्रोध भन्दछ । यो द्वेषको एक अंश हो । यसै क्रोधको कारणले हिंसा गर्ने *(र)* पिट्ने जस्ता पाप गराउने हो।

## ७२. क्लेश

राग (लोभ), प्रतिघ (द्वेष), मान (अभिमान), अविद्या (मोह वा अज्ञान), कुदृष्टि (मिथ्यादृष्टि) *(र)* विचिकित्सा (धर्मप्रति शंका) यी छ प्रकारकालाई क्लेश भन्दछ ।

---

२२. पूर्व पाद टिप्पणी संख्या २, पृ ४०

## ७३. गन्ध

*नाकद्वारा सुघ्ने)* सुगन्ध, दुर्गन्ध, समगन्ध (मधुर) *(र)* विषमगन्ध (कडा) यी चार प्रकारका गन्धहरु (वास्) हुन्छन् ।

## ७४. गन्धधातु

नाकबाट सुघ्ने गन्धलाई गन्धधातु भनेर पनि भन्ने चलन छ ।

## ७५. गन्धायतन

वास-गन्धलाई गन्धायतन पनि भन्ने चलन छ ।

## ७६. गोचर

रुप, रस, गन्ध, स्पर्श, शब्द *(र)* धर्मधातु (मनले ग्रहण गर्ने ज्ञानको विषय लाई) गोचर, विषय *(र)* आलम्बन पनि भन्दछन् ।

## ७७. ग्रन्थ धारणी

***द्वाचत्वारिंशतोऽक्षराणामन्यतमारक्षरमनसिकारे तदादिसर्वधर्मपर्यायाभिलपनसामर्थ्यप्रतिलम्भो धारणी ।***[२३]

बोधिसत्वहरुलाई लाभ हुने चार प्रकारका धारणी*(हरु)* मध्ये एक *(ग्रन्थ)* धारणी हो । अ, आ आदि ४२ वटा अक्षर *(हरु)* मध्ये केहि अक्षरहरु सम्झना साथै सो अक्षरहरुबाट सुरु हुने सवै सूत्रहरु स्मरण गर्न र भन्न सक्ने *(क्षमता)* लाई धारणी भन्दछ । यस प्रकारको धारणी बोधिसत्वहरुलाई लाभ हुने ऋद्धि हो ।

---

[२३]. पूर्व पाद टिप्पणी सङ्ख्या ८, पृ १२९

### ७८. घ्राणधातु

शरीर धारण गरिरहने नाकको ईन्द्रियलाई घ्राणधातु भन्दछ ।

### ७९. घ्राणायतन

वास प्रवेश हुने *(र)* उक्त वास रहने स्थान नाकलाई घ्राणायतन पनि भन्दछ ।

### ८०. घ्राणविज्ञान धातु

नाकद्वारा *(सुँघेर)* ज्ञान लिने (सुँघ्ने) मनलाई घ्राणविज्ञान धातु भन्दछ ।

### ८१. चक्रवाल, महाचक्रवाल

यी दुईवटा पर्वतले सुमेरुपर्वतलाई घेरी राखेको छ भनेर बौद्ध साहित्यमा उल्लेख छ ।

### ८२. चक्षुर्धातु

शरीर धारण गरि राखेको चक्षु इन्द्रिय (आँखा) लाई चक्षुर्धातु भन्दछ ।

### ८३. चक्षुरायतन

हेर्ने मन बस्ने स्थान भएको चक्षुइन्द्रिय (आँखा) लाई चक्षुरायतन भन्दछ ।

### ८४. चक्षुर्विज्ञान

आँखाद्वारा हेर्ने मनलाई चक्षुर्विज्ञान भन्दछ ।

## ८५. चतु:कल्प

अन्त:कल्प, महाकल्प, शून्यकल्प *(र)* सारकल्प गरेर यी चार प्रकारका कल्प छन् भनेर *(आचार्य नागार्जुन कृत धर्मसंग्रहमा)* उल्लेख छन् । अभिधर्मकोशमा संवर्त, विवर्त, अन्तर *(र)* महाकल्पको भेदले चार प्रकारका कल्पहरु उल्लेख छ । तर शून्यकल्प र सारकल्पको वर्णन उल्लेख भइरहेको देखिन्दैन । शायद कतै *(उल्लेख गरि राखेका)* छन् होला ।

संवर्तकल्पमा यो पृथ्वी नाश भएर जान्छ । त्यस्तै नै नरक र त्यहाँ रहने *(प्राणिहरु)* पनि नाश भएर जान्छ ।

विवर्तकल्पमा वायु आदि *(उत्पन्न)* भएर आउँछ, त्यसपछि पृथ्वी पनि *(उत्पन्न)* भएर आउँछ, प्राणिहरु पनि *(उत्पन्न)* भएर आउँछ *(र)* नरकादि *(लोक)* पनि *(उत्पन्न)* भएर आउँछ ।

अन्त:कल्पमा शुरुमा प्राणिहरुको आयु असंख्य भएको हुन्छ । *(तर पछि)* आयु घटेर जाँदै मानिसहरुको आयु दश वर्षसम्मको मात्रै हुन्छ । यस्तो अवस्थासम्म हुने कल्पलाई अन्त:कल्प भन्दछ ।

*(यस्तै प्रकारले)* ८० वटा संवर्त *(र)* विवर्तको अवधि पार भएपछि एक महाकल्प हुन्छ ।

## ८६. चतुर्थध्यान

*उपेक्षास्मृतिपरिशुद्धि अदुखा-सुखावेदना चित्तैकाग्रतां चेति चतुरङ्गम् ।*

विशुद्ध भएको उपेक्षा, विशुद्ध भएको स्मृति, दु:ख र सुख रहित वेदना(अनुभव) र चित्त एकाग्रता यी चार प्रकारका अङ्गले युक्त भएको ध्यानलाई चतुर्थध्यान भन्दछ ।

यी ध्यानमा उपेक्षा प्रवल हुने हुनाले उपेक्षा बोधक शब्द दुईपटक प्रयोग गरि राखेका छन् । सुखलाई त्याग गर्नु नै यस ध्यानका विशेषता हुन् ।

## ८७. चतुर्दान

आमिष, अभय, धर्म *(र)* अभिषेक यी चार प्रकारका *(दानलाई)* चतुर्दान भन्दछ । पञ्चाभिषेक आदि दानलाई अभिषेकदान भन्दछ । अरु तीन प्रकारका *(दानको विषयबारे)* त्रिदान *(शब्दमा)* हेर्नु होला ।

## ८८. चतुर्धारणी

आत्मधारणी, ग्रन्थधारणी, धर्मधारणी *(र)* मन्त्रधारणी *(यी)* चार प्रकारका *(धारणीलाई)* चतुधारणी भन्दछ । धारणी शब्दको विशेष कुरा ग्रन्थधारणी शब्दमा हेर्नु होला ।

## ८९. चतुर्ध्यान

प्रथम ध्यान, द्वितीय ध्यान, तृतीय ध्यान *(र)* चतुर्थ ध्यान यी चार प्रकारका *(ध्यान)* लाई चर्तुध्यान भन्दछ । यिनीहरुमा वितर्क, विचार, प्रीति, सुख *(र)* कुशल वस्तुमा एकाग्रताले युक्त भएको ध्यानलाई प्रथम ध्यान भन्दछ । यसमा पाँच अङ्गहरु हुन्छन् ।

प्रीति, सुख, अध्यात्मप्रसाद *(र)* एकाग्रता यी चार प्रकारका अङ्गहरु भएको ध्यानलाई द्वितीय ध्यान भन्दछ ।

उपेक्षा, स्मृति, संप्रज्ञान, सुख *(र)* एकाग्रता यी पाँच प्रकारका अङ्ग भएको ध्यानलाई तृतीय ध्यान भन्दछ ।

अद्:खा असुखावेदना, उपेक्षा परिशुद्धि, स्मृति परिशुद्धि *(र)* एकाग्रता यी चार प्रकारका अङ्गले युक्त भएको *(ध्यानलाई)* चतुर्थ ध्यान भन्दछ ।[२४]

## ९०. चतुप्रतिशरण

चार प्रकारका प्रतिशरणता *(भरपर्नु पर्ने विषय)* लाई चतुप्रतिशरण भन्दछ । यी निम्नानुसारका हुन् ।

१. अर्थप्रतिशरणता- शास्त्र अध्ययन गर्दा अक्षरादि मात्रै पढ्ने होईन अर्थ बुझ्नु पर्दछ । अर्थ समेत बुझ्ने गरि अध्ययन गर्नुलाई अर्थप्रतिशरणता भन्दछ ।
२. ज्ञानप्रतिशरणता- कार्यगर्दा ज्ञानले बुझेर मात्र गर्नु पर्दछ मनोमान्य रुपले गर्नु हुन्दैन । यसरी ज्ञानले बुझेर गर्नुलाई ज्ञानप्रतिशरणता भन्दछ ।
३. नीतार्थप्रतिशरणता- बुद्धको उपदेशहरुमा व्यवहार सत्यका विषय *(लाई)* परमार्थसत्यका विषयसंग मिलाएर *(उपदेश दिनु)* हुँदैन । यसलाई नीतार्थप्रतिशरणता भन्दछ ।
४. धर्मप्रतिशरणता- अध्ययन अध्यापन कार्यगर्दा बुद्धले देशना गर्नु भएका धर्मलाई प्रमाण मान्नु पर्दछ । पुद्गल (व्यक्ति)लाई प्रमाण मान्नु हुँदैन । यसैलाई धर्मप्रतिशरणता भन्दछ ।

## ९१ चतु: प्रतिसंविद

धर्म, अर्थ, निरुक्ति*(र)* प्रतिभान यी चार वटालाई *(चतु:)* प्रतिसंविद भन्दछ ।

---

[२४]. पूर्व पाद टिप्पणी सङ्ख्या ९., पृ २२३ र पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ३६८.

*धर्मप्रतिसंविदपर्यायेषु, तद्यथा; विद्यादीनारव्या ज्ञानमदर्शनमनभिसमय इत्येवमादिष्व व्याघातसमृद्धौ यः समाधिः।*[२५]

धर्मग्रंथमा अविद्या, अदर्शन, अनभिसमय आदि शव्दको अर्थ गर्दा धर्मग्रन्थमा उल्लेखित भाव नबिग्रने गरि सावधानी पूर्वक व्याख्यान् गर्नुलाई धर्मप्रतिसंविद भन्दछ।

अर्थप्रतिसंविद विषयमा यसै शव्दमा हेर्नु होला।

निरुक्तिप्रतिसंविद

*निरुक्तिप्रतिसंविज्जनपदभाषायां धर्म निर्वचनचेति।*

देशको भाषालाई धर्मसंग मिलाएर विग्रह गरि गर्ने अर्थात् व्याकरणद्वारा बोध गराउने लाई निरुक्तिप्रतिसंविद भन्दछ।

*रुप्येते तस्माद रुपः।*

यसले दुःख दिन्छ, त्यसैले यसलाई रुप भन्दछ भनेर संस्कृत*(भाषामा)* उदाहरण दिएको।

नेपालभाषामा (कम्मरलाई बाँध्ने कम्मरवन्ध) जम्तालाई निरुक्ति भन्दछ।

प्रतिभान प्रतिसंविद

*प्रतिभान प्रतिसंविद धर्मप्रभेदेषु।*[२६]

धर्मलाई अनेक प्रभेद गरि प्रस्तुत गर्नुलाई प्रतिभान प्रतिसंविद भन्दछ।

## १२. चतुर्ब्रम्हविहार

मैत्री, करुणा, मुदिता*(र)* उपेक्षा यी चार वटा लाई ब्रम्ह विहार*(चतुब्रम्हविहार)* भन्दछ, अप्रमाण्य पनि भन्दछन्।

---

[२५]. पूर्व पाद टिप्पणी सख्या ८, पृ १२८

[२६]. ऐजन

मैत्री

*सत्वानां हितसुखोसंहरणलक्षणा मैत्री ।*

प्राणिहरुको हित सुख होस् भनेर कामना गर्नुलाई मैत्री भन्दछ ।

करुणा

*परदुःखापनयनकामतालक्षणा करुणा ।*

अर्काको दुःख निवारणगर्ने इच्छालाई करुणा भन्दछ ।

मुदिता

*परसम्पत्ति प्रमोदलक्षणा मुदिता ।*

अर्काको उन्नति*(तथा)* सम्पन्न भएको देखेर हर्षित हुनुलाई मुदिता भन्दछ ।

उपेक्षा

*इष्टानिष्ट मध्यकारप्रवृत्तिलक्षणा उपेक्षा ।*

मन पर्नु र मन नपर्नु, राम्रो लाग्नु र नलाग्नु केहि पनि भेदभाव नराखि मध्यस्थ हुनुलाई उपेक्षा भन्दछ ।

## ९३. चतुर्मार

स्कन्ध, क्लेश, देवपुत्र *(र)* मृत्यु यी चार वटालाई चतुर्मार भन्दछ ।

*(शरीरमा)* पञ्चउपादन स्कन्ध गडबड भयो भने रोग लाग्ने हुनाले स्कन्धलाई मार भनेको हो । रागादि क्लेशहरुले कुशल कर्म गर्ने कार्यमा विघ्न गर्ने हुनाले क्लेशलाई पनि मार भनेका हुन् । कृष्णवन्धु आदि *(देवपुत्रहरुले)* कुशलकर्म गर्नेहरुलाई विघ्न गर्ने हुनाले देवपुत्रलाई पनि मार भनेका हुन् । कुशल कर्म गर्न नपाउँदै असामयिक मृत्यु हुने हुनाले मृत्युलाई पनि मार भनेको हो ।

## ९४. चतुर्युग

कृतयुग(सत्ययुग), त्रेतायुग, द्वापरयुग *(र)* कलियुग यी चार वटा युगलाई चतुर्युग भन्दछ ।

## ९५. चतुर्योनि

अण्डज (अण्डाबाट जन्म हुने), संस्वेदज (चतुर्महाभूत परिपक्व भई जन्म हुने), जरायुज (गर्भाशयबाट जन्म हुने) *(र)* उपपादुक (सम्पूर्ण इन्द्रिय, अङ्ग प्रत्यङ्ग एकैचोटि उत्पन्न भएर जन्म हुने (देवता आदि प्राणिहरु) यी चारवटा योनिलाई चतुर्योनि भन्दछ ।

## ९६. चतुरार्यसत्य

दुःखसत्य, दुःखसमुदयसत्य, दुःखनिरोधसत्य *(र)* दुःखनिरोधमार्गसत्य यी चारवटा सत्यलाई चतुरार्यसत्य भन्दछ । *(चतुरार्यसत्य)* म भन्दा पहिलेका कसैले बुझ्न नसकेका र मैले नै सर्वप्रथम पत्ता लगाएको ज्ञान भनेर बुद्धले भन्नु भएको छ । *(अतः)* आर्य *(बुद्ध)* को सत्य *(यथार्थ - सत्य)* ज्ञानलाई चतुरार्यसत्य भनेको हो ।

जन्मेर मृत्यु नहुञ्जेलसम्म जीवनभर जतिपनि हामीले खाने, पिउने र लगाउने कार्य गर्नुका साथै अनक क्रियाहरु गर्दछौं । ती सबै सुखको खोजी हो । सुखी भएको भए सुखको खोजि नगर्ने होला । त्यसैले हाम्रो जीवन (पञ्चउपादानस्कन्ध) नै दुःख भनेर दुःखसत्य भनेर घोषणा गर्नु भएको हो ।

हाम्रो जीवनमा खाने, पिउने आदि लौकिक कामतृष्णा र स्वर्गमा जन्मन्छु भन्ने परलोकको *(इच्छा गर्ने)* भव तृष्णा तथा स्वर्ग नरक भन्ने छैन, पाप *(र)* पुण्यको फल छैन *(त्यसैले)* यसै लोकमा जत्ति मोजमस्ति गर्न सकिन्छ सो गर्ने भन्ने विभव तृष्णाको कारणले नै हामी जन्मनु पर्ने वा

दुःखको कारण हो । यहि तृष्णा नै दुःखको कारण *दुःखसमुदय* हुन् । त्यसैले दुःख समुदयसत्यपनि निश्चय *(नै)* हो भनेर बुद्धले देशना गर्नु भएको हो ।

दुःखलाई छेक्ने निःशेष हुनेगरि दुःखनाशगर्नेलाई दुःख निरोध भन्दछ । यसरि दुःख निरोध निर्वाण(मोक्ष) लाभ भएमा मात्रै प्राप्त हुन्छ । ब्रम्हलोकमा जन्म भएतापनि कल्पौं पछि पुनः मनुष्य वा पशु भएर जन्म हुन सक्छ । यो कुरा सत्य हो। त्यसैले निर्वाण नै दुःखनिरोध सत्य हो ।

निर्वाण हुने (मोक्ष प्राप्त हुने) दुःख नाश गर्ने उपाय (मार्ग) लाई नै दुःख निरोधमार्गसत्य भन्दछ । यसै मार्ग (उपाय) लाई नै आर्याष्टाङ्गिक मार्ग भन्दछ ।

१७. **चतुरार्यसत्येषु षोडशः क्षान्ति ज्ञानक्षणाः ।**

दुःखसत्यमा

१.धर्मज्ञानक्षान्ति

२.धर्मज्ञान

३.अन्वयज्ञानक्षान्ति *(र)*

४.अन्वयज्ञान यी चारवटा *(क्षण)* छन् । त्यस्तै दुःख समुदयसत्यमा

१.धर्मज्ञान क्षान्ति

२.धर्मज्ञान

३. अन्वयज्ञान क्षान्ति *(र)*

४.अन्वयज्ञान यी चार वटा *(क्षणहरु)* छन् ।

त्यस्तै नै दुःख निरोध सत्यमा पनि यी चारवटा *(क्षणहरु)* र दुःख निरोधमार्गसत्यमा पनि चार वटा नै *(क्षणहरु)* गरि जम्मा १६ वटा क्षण हुन्छन् । यी १६ वटा *(क्षणहरु)* मध्ये आठवटा क्षान्ति क्षणलाई आनन्तर्य मार्ग क्षण भन्दछ । यी आठवटा ज्ञान क्षणलाई विमुक्ति मार्ग क्षण भन्दछ ।

दु:खसत्यको साक्षात्कारद्वारा कामभूमिमा उत्पन्न हुने दु:ख भावना गरेर नाश हुने सबै क्लेशलाई नाश गर्ने आनन्तर्यमार्गलाई नै दु:खे धर्मज्ञान क्षान्तिक्षण भनेको हो ।

दु:खसत्यको साक्षात्कारद्वारा कामभूमिमा उत्पन्न हुने दु:ख भावना गरेर क्लेशलाई नाश गर्ने विमुक्तिमार्ग नै दु:खे धर्मज्ञानक्षण भनेको हो ।

दु:ख सत्यको साक्षात्कारद्वारा रुपभूमि र अरूपभूमिमा उत्पन्न हुने दु:ख भावना गरेर नाश हुने सबै प्रकारका क्लेश नाश गर्ने आनन्तर्य मार्ग नै दु:खे अन्वयज्ञान क्षान्तिक्षण भनेको हो ।

दु:खसत्यको साक्षात्कारद्वारा रुप र अरुपभूमिमा उत्पन्न हुने दु:खभावना गरेर नाश हुने सबै क्लेशलाई नाश गर्ने विमुक्तिमार्ग नै दु:खे अन्वयज्ञानक्षण हो ।

एवं रितले समुदयसत्यमा, निरोधसत्यमा *(र)* मार्गसत्यमा पनि (यस्तै) मिलाएर बुझ्नु पर्दछ ।

## १८. चतुर्वैशारद्य

अभिसंबोधि, आश्रवक्षयज्ञान, नैर्यानिक मार्गावतरण *(र)* अन्तरायिकधर्मान्यथात्वनिश्चितव्याकरण यी चारवटालाई *(चतु:)* वैशारद्य (निर्भयता) भनी उल्लेख गरि राखेको छ । अर्थात्

१.मलाई बुद्धत्व लाभ भयो भन्नमा

२.मेरो आश्रव क्षय भयो भन्नमा

३.यो निर्वाणतिर पुग्ने मार्ग,

४.यी अकुशल हुन् र यी कुशल हुन् (र) यिनीहरुका फल यस्ता हुनेछन् यस कुरामा फरक हुँदैन भनेर श्रमण, देव, मार *(र)* ब्रम्हाहरुले *(मलाई)* दोष दिनेछ भन्ने कुरामा

मलाइ डर छैन र मैले धर्मचक्र प्रवर्तन गर्दछु भनेर फूर्तिसाथ भन्ने बुद्धको निर्भिकतालाई चतुर्वैशारद्य भन्दछ।

## ९९. चतु: समाधि

आलोकसमाधि, बृद्धालोकसमाधि, तत्वैकदेशप्रविष्ट समाधि (र) आनन्तर्यसमाधि यी चार प्रकारका समाधि *(लाई चतु: समाधि भन्दछ। यी समाधि)* अधिमुक्ति चर्या भूमिमा पुग्ने बोधिसत्वहरुलाई प्राप्त हुन्छ भनेर उल्लेख छ।[२७] माथि उल्लेखित शब्दहरुको विषय अधिमुक्ति चर्याभूमि शब्दमा हेर्नु होला।

## १००. चतु:संग्रह वस्तु

दान, प्रियवचन, अर्थचर्या (र) समानार्थता। यी चार वटा उपायद्वारा मान्छेहरुलाई साथ लिनेलाई चतु:संग्रह वस्तु (संगठन गर्ने उपाय) भनेर उल्लेख गरि राखेको छ। आफ्नो पक्ष मजबुत पार्न केहि वस्तु वा धन दिएर मान्छेहरु जम्मा गर्न सक्ने हुनाले दानलाई संग्रह वस्तु *(संग्रह गर्न योग्य वस्तु)* भन्दछ।

कर्णप्रिय हुनेगरि वचन बोल्ने *(तथा)* अर्काको मनलाई अनुकुल हुनेगरि कुरा गरेर पनि मान्छेहरु जम्मा गर्न सक्ने हुनाले प्रियवचनलाई पनि संग्रह वस्तु भन्दछ।

आफ्नो वशमा लिनुपर्ने मान्छेहरुलाई आवश्यकता अनुसार बेला बखतमा आवश्यकता अनुसार सहयोग गर्नु पनि (अर्थचर्या) संग्रहवस्तु हो।

आफू गमक्क नभइ सानो भइ आफ्नो पक्षधर सबैसंग समान व्यवहार गर्नु (समानार्थता) पनि संग्रह वस्तु हो।

---

२७. पूर्व पाद टिप्पणी संख्या १, पृ ३०१

## १०१. चित्त विप्रयुक्त संस्कार

प्राप्ति, अप्राप्ति, सभागता, आसंगिक समापत्ति, निरोध समापत्ति, जीवितेन्द्रिय, जाति, जरा, स्थिति, अनित्यता, नामकाय, पदकाय, *(र)* व्यञ्जनकाय यी १३ प्रकारका संस्कारलाई चित्त विप्रयुक्त संस्कार (चित्तसंग सम्बन्ध नभएको संस्कार) भनेर भन्दछ । यस बारे विशेष कुरा सो सो शब्दमा नै हेर्नु होला ।

## १०२ . चित्त संप्रयुक्त संस्कार

वेदना, संज्ञा, चेतना, छन्द, स्पर्श, मति, स्मृति, मनस्कार ,अधिमोक्ष , समाधि, श्रद्धा, अप्रमाद, प्रश्रब्धि, उपेक्षा, ह्री, अपत्रपा, अलोभ, अद्वेष, अहिंसा, वीर्य, मोह, प्रमाद, कौसिद्य, अश्राद्धच, स्त्यान, औद्धत्य, अह्रीकता, अनपत्रपा, क्रोध, उपनाह, शाठ्य, इर्ष्या, प्रदाश, म्रक्ष, मात्सर्य, माया, मद, विहिंसा, वितर्क *(र)* विचार यी ४० *(प्रकारका)* संस्कार (मानसिक भाव) लाई चित्त संप्रयुक्त संस्कार (चित्तसंगै आउने संस्कार) भनेर उल्लेख गरि राखेको छ ।

माथि उल्लेखित वेदना देखि समाधिसम्मको दशवटा चेतसिक(संस्कार)लाई महाभूमिक भन्दछ । यी सबै मनमा निरन्तर रुपले आइरहने संस्कार हुन् ।

श्रद्धादेखि वीर्यसम्मको दश चेतसिक *(संस्कार)* कुशलचित्तसंग मात्र आउने हुनाले यिनीहरुलाई कुशल महाभूमिक भन्दछ ।

मोहदेखि औद्धत्यसम्म छ वटा संस्कारलाई क्लेश महाभूमिक भन्दछ ।

अह्रीकता र अनपत्रपा यी दुई संस्कारलाई अकूशल महाभूमिक भन्दछ ।

क्रोधदेखि विहिंसासम्म दश वटा संस्कारलाई परीत्त क्लेश भूमिक भन्दछ ।

यी कुराहरुको वर्णन अभिधर्मकोश इन्द्रिय निर्देशमा उल्लेख गरिएका छन् । (यसको) विशेष शब्दार्थ सो सो शब्दमा हेर्नुहोला ।

## १०३. चेतना

*चित्ताभिसंस्कारो मनसश्चेष्टा चेतना ।*[२८] *यस्यां सत्यामालम्बनं प्रति चेतसः प्रस्पन्द इव भवति, अयस्कान्तवशादयः प्रस्पन्दवत् ।*

मनमा परिवर्तन भएर उत्पन्न भएको मनको कार्यलाई चेतना भन्दछ । चुम्बकको अगाडि फलामको सियो राख्दा हल्लिए झैं मनको स्पन्दन (कम्पन) नै चेतना हो ।

## १०४. छन्द

*अभिप्रेते वस्तुन्याभिलाषः छन्दः ।*[२९]

*कर्त्तुकामना ।*[३०]

आफूलाई मनपर्ने वस्तुको चाहना वा इच्छा गर्नुलाई छन्द भन्दछ ।

## १०५. जरा

खिएर जाने र बृद्ध हुनेलाई जरा भन्दछ । जातिले (उत्पति) जराले *(जीर्ण)* स्थितिले (स्थिरपना) *(र)* अनित्यताले

---

२८. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ. २४

२९. ऐजन, पृ. ३०

३०. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ. ५४

नाश गर्दछ । यी चार प्रकारका लक्षण (चिन्ह) भएको वस्तुलाई संस्कृतधर्म भन्दछ ।[31]

## १०६. जरामरण

बुढा - बुढि हुनु र मृत्यु भएर जानेलाई जरामरण भन्दछ। यी *(विषयको चर्चा)* प्रतीत्यसमुत्पादमा आउँदछ ।

## १०७. जाति

उत्पति हुने वा जन्म हुनेलाई जाति भन्दछ । यो पनि संस्कृत धर्मको लक्षण हो । अथवा प्रतीत्यसमुत्पाद *(नियम अनुसार)* वर्तमान कालका चित्त (विज्ञान) को प्रवाह भविष्यत काल (अर्को/पुन:र्जन्म)मा पुग्न जानेलाई जाति भन्दछ ।

## १०८. जिह्वाधातु

शरीर धारण गरिरहेका जिह्वेन्द्रिय (जिब्रो) नै जिह्वाधातु हो ।

## १०९. जिह्वायतन

स्वाद आउने द्वार वा स्वाद लिने मन (जिह्वा विज्ञान) वास गर्ने स्थान भएकोले जिब्रोलाई जिह्वायतन पनि भन्ने गरेको हो ।

## ११०. जिह्वाविज्ञानधातु

स्वाद लिने मनलाई जिह्वाविज्ञान धातु भन्दछ ।

## १११. जीवित (जीवितेन्द्रिय)

आयुलाई जीवित वा जीवितेन्द्रिय भन्दछ । हाम्रो

---

[31]. पूर्व पाद टिप्पणी सङ्ख्या ९, पृ ३७

शरिरलाइ सड्न नदिनु तताइ राख्नु *(मनलाई राखिराख्नु यो)* इन्द्रियको कार्य वा अधिकार हो ।

## ११२. ज्ञानं त्रिविधम्

अविकल्पक, विकल्पसम भावबोधक *(र)* सत्यार्थोपाय यी तीन प्रकारका ज्ञान हुन्छन् ।

## ११३. तत्वैकदेशप्रविष्ट समाधि

यो समाधि बोधिसत्वहरुलाइ लाभ हुने हो । यसको विशेष करा अधिमुक्ति चर्याभूमि शब्दमा हेर्नु होला ।

## ११४. तथागत दशबल

बुद्धसंग *(निम्न)* दश प्रकारका बलहरु हुने भएकाले ती बललाई तथागत दशबल भन्दछ । *(ती निम्नासारका हुन्)*

११४.१. स्थानास्थान ज्ञानबल (ठीक बेठीक छुट्याउने ज्ञानको बल)

११४.२. कर्मविपाक ज्ञानबल (यस प्रकारको पुण्य अपुण्यको यो यो फल हुन्छ भन्ने ज्ञानको बल)

११४.३. नानाधातु ज्ञानबल (कामधातु, रुपधातु *(र)* अरुपधातु आदि नाना लोकधातुको ज्ञानको बल)

११४.४. नाना अधिमुक्ति ज्ञानबल (प्राणिहरुको नाना प्रकारका दृढ निश्चय बुझ्ने ज्ञानको बल)

११४.५. सत्वेन्द्रिय परापर ज्ञानबल (प्राणिहरुको श्रद्धादि इन्द्रिय कतिसम्म बलियो छ भनेर बुझ्ने ज्ञानको बल)

११४.६. सर्वत्रगामिनि प्रतिप ज्ञानबल (ब्रम्हलोकमा जाने मार्ग यी हुन्, नरकमा जाने मार्ग यी हुन् *(र)* मोक्ष *(निर्वाण)* पुग्ने मार्ग यी हुन् भनेर सबैतिर

जाने मार्ग विषयको ज्ञानको बल । *(यसलाई)* ध्यान विमोक्ष समाधि समापत्ति *(पनि भन्दछ )*।

११४.७. संक्लेश व्यवदान व्यवस्थान ज्ञानबल (चतुर्ध्यान, अष्ट विमोक्ष, चतुरारुप्य र निरोध समापत्तिका यी दोष, यी शुद्धि *(र)* यी नियमहरू भनेर थाहा हुने ज्ञानको बल)

११४.८. पूर्वे निवासानुस्मृति ज्ञानबल ( कल्प कल्प अगाडिका जन्म का कुरा स्मरण गर्ने ज्ञानको बल)

११४.९. श्च्युत्युत्पति ज्ञानबल (यी प्राणि यहाँवाट मरणपछि यहाँ जन्म लिन गयो भनेर हुने ज्ञानको बल)

११४.१०. आश्रवक्षय ज्ञानबल (रागादि आश्रव ममा छैन भनेर थाहा हुने ज्ञानको बल)

यी दशवटा बल बुद्धसंग भएकोले वहाँलाई दशबल भनेर उल्लेख गरि आएको हो ।

## ११५. तृतीय ध्यान

*उपेक्षा, स्मृति, संप्रजन्य, सुख, चित्तैकाग्रता चेति पञ्चाङ्ग तृतीय ध्यानम् ।*

उपेक्षा, स्मृति, संप्रजन्य(सचेत), सुख*(र)* एकाग्रता यी पाँच अङ्गले युक्त*(ध्यान)* लाई तृतीय ध्यान भन्दछ ।

## ११६. तृष्णा

*कामगुणमैथुनरागसमुदाचारावस्था तृष्णा ।*[३२]

सुख भोग मैथुन आदिको लोभको अवस्थालाई तृष्णा भन्दछ । यस बारे प्रतीत्यसमुत्पादमा हेर्नु होला ।

## ११७. त्यागानुस्मृति

आफूले गरेका दानहरुलाई स्मरण गरि मैले आफ्नो कंजुसीपन छोडि लोभ नगरेर बसिरहेको छु भन्ने सम्झना गर्नुलाई त्यागानुस्मृति भन्दछ ।

## ११८. त्रयोदशभूमि

प्रमुदिता, विमला, प्रभाकरी, अर्चिष्मती, सुदुर्जया, अभिमुखी, दूरङ्गमा, अचला, साधुमती, धर्ममेघा, समन्तप्रभा, निरुपमा र ज्ञानवती यी १३ वटा भूमिलाई त्रयोदश भूमि भन्दछ ।

*(माथिका क्रमश)* दश वटा भूमि बोधिसत्वका विषय हुन *(भने)* अरु तीन वटा बुद्धको विषय भनि उल्लेख गरि राखको छ ।

*यथा श्रावकयानेऽष्टभूमयः परिदीपिता ।*
*महायानेऽपि तद्वद्दशधा बोधिसत्वभूः ॥*[३३]

अर्थात् जसरी श्रावकयानमा श्रोत आपत्ति आदिको र फलको भेदले लाकोत्तर भूमि आठ वटा भेद उल्लेख गरि राखेका छन् त्यस्तै नै महायानमा पनि उपर्युक्त दश वटा भूमि उल्लेख गरि राखेका हुन् भनि बुझ्नु पर्दछ । ती

---

[३२]. पूर्व पाद टिप्पणी सङ्ख्या ९., पृ १३२

[३३]. अ भि प पृ ११० (ग्रन्थको नाम थाहा नभएको (अनु)

भूमिहरुका विशेष कुरा बुझ्नको लागि दशभूमि नामक ग्रन्थ हेर्नु होला ।

## ११९. त्रिविध उपाय

सत्वावतारक (प्राणिहरुलाई आफ्नो धर्मको विषयमा बताएर आफ्नो धर्ममा प्रवेश गराउने), स्वदोपकर्षक (आफ्नो दोष नबनाउने) र क्षिप्राभिसंबोधक (छिटै बोधिज्ञान लाभ गराइदिने) यी तीन वटा उपाय *(लाई त्रिविध उपाय भन्दछ ।)* बुद्धले यी तीनवटा उपाय बताउनु भएको छ ।[३४]

## १२०. त्रिविध क्षान्ति

धर्मनिध्यान *(क्षान्ति)* (धर्मलाई चिन्तन मनन गर्ने क्षमता) दुःखाधिवासन क्षान्ति (दुःख सहन सक्ने क्षमता) परोपकार धर्म क्षान्ति (परोपकार गर्ने कार्यमा/कार्यगर्दा सहन गर्ने क्षमता) यी तीन प्रकारका सहन गर्नुलाई त्रिविध क्षान्ति भन्दछ ।

## १२१. त्रिविध दान

धर्मदान, आमिषदान *(र)* मैत्रीदान यी तीन वटा दानलाई त्रिविध दान भन्दछ । यश, कीर्ति, धन आदिमा कुनै प्रकारको लोभ नराखि क्लेशले मुक्त भएको धर्म व्याख्यान् गरेर उपदेश दिनुलाई धर्मदान भन्दछ ।

---

[३४]. प्रकाशित धर्मसंग्रहहरुमा त्रिविध उपाय निम्नानुसारका छन् :-
सर्वसत्वावबोधक - सबै प्राणीहरुका विषयमा थाहा पाउनु
सत्वार्थाभाव - सधैं सबै प्राणीहरुका हित-सुखका लागि भावना गर्नु
क्षिप्रसुखाभिसम्बोधि - सबै प्राणीहरुलाई छिटै सुखरुपी अभिसंबोधि ज्ञान प्राप्त गराइ दिनु ।
द्रष्टव्य :- नाशि जाम्रमो र डेछेन छिमे, धर्मसंग्रह (वाराणसी केन्द्रीय तिब्बति उच्च संस्थान, १९९३), पृ ७७-७८

खाने, पिउने, लाउने आदि दिने कार्यलाई आमिषदान भन्दछ।

डर मान्नु पर्दैन, तिमीलाई मैले उपकार गर्दछु भनेर भरोसादिनुलाई **मैत्रीदान** (अभयदान) भन्दछ।

## १२२. त्रिविध ध्यान

दोषापकर्षक (रागादि दोष नाश गर्नु, सुख वैहारिक (सुखपूर्वक समय बिताउनु) *(र)* अशेष वैभूतिक (संपूर्ण ऋद्धि लाभ गर्नु) यी तीन प्रकारका ध्यानलाई **त्रिविध ध्यान** भन्दछ।

## १२३. त्रिविध प्रज्ञा

श्रृतमयी प्रज्ञा (सुनेर वा पढेर प्राप्त हुने ज्ञान) चिन्तानमयीप्रज्ञा (चिन्तन, मनन (*अर्थात्*) विचार गरेर प्राप्त हुने ज्ञान) भावनामयीप्रज्ञा (ध्यान भावना र अभ्यास गरेर प्राप्त हुने ज्ञान) यी तीन प्रकारका ज्ञानलाई **त्रिविध प्रज्ञा** भन्दछ।

## १२४. त्रिविध प्रणिधान

स्वसंभार प्रावन्धिक (आफ्नो ज्ञान र पूण्य सम्भारपूर्ण गर्ने प्रतिज्ञा *(गर्नु)* ) सत्वार्थप्रावन्धिक (सत्वप्राणिहरुको निम्ति प्रतिज्ञा अधिष्ठान गर्नु) बुद्धक्षेत्रपरिशोधक (बुद्धभूमि लाभ होस् भनेर प्रतिज्ञा गर्नु) यी तीन प्रकारका प्रणिधान (प्रतिज्ञा अधिष्ठान)लाई **त्रिविध प्रणिधान** भन्दछ।

## १२५. त्रिविध बल

कर्मव्यावर्तक (पूर्वजन्मको कुशल अकुशल कर्म रित्याउनु र वर्तमान जीवनमा अकुशल कर्मलाई छेक्ने बल) क्लेशापकर्षक (रागादि क्लेश रित्याउने बल)

मारपरप्रवादिव्यावर्तक (मार र अन्य मतावलम्बिहरुलाई हटाउने बल) यी तीन प्रकारका बललाई **त्रिविध बल** भन्दछ।

## १२६. त्रिविध वीर्य

संनाहवीर्य (कुशल कर्म आरम्भ गर्ने उत्साह), प्रयोगवीर्य (कुशलकर्म गरि राखेको बेलाको उत्साह) *(र)* निष्ठावीर्य (कुशलकर्म सफल भएको बेलाको उत्साह) यी तीन प्रकारका उद्योग, जांगर उत्साहलाई त्रिविध वीर्य भन्दछ।

## १२७. त्रिविध शील

संवरशील, कुशल संग्राहकशील *(र)* सत्वार्थ क्रियाशील यी तीन प्रकारका शीलहरु छन्। *(यी तीन प्रकारका शीललाई त्रिविध शील भन्दछ।)* इन्द्रिय दमन गर्नु, दश कुशल*(कर्म)* ग्रहण गर्नु*(र)* प्राणिहरुलाई हितसुख गर्नु यसको प्रमुख उद्देश्य हो।

## १२८. दश अकुशल

१. प्राणातिपात (हिंसा गर्नु)
२. अदत्तादान (लुटेर वा चोरेर लिनु)
३. काममिथ्याचार (व्यभिचार गर्नु)
४. मृषावाद (झूठो बोल्नु)
५. पैशुन्य (चुकुली गर्नु)
६. पारुष्य (कडा वचन बोल्नु)
७. संभिन्नप्रलाप (व्यर्थजाने गफ गर्नु)
८. अभिध्या (अर्काको वस्तु लोभ गर्नु)
९. व्यापाद (अर्कालाई अहित गर्ने विचार राख्नु)
१०. मिथ्यादृष्टि (पाप पुण्यको फल छैन भनेर विचार गर्नु)

यी दश वटालाई दश अकुशल (नराम्रो कर्म) भन्दछ।

## १२९. दशज्ञान

दु:ख सत्यको ज्ञान, समुदय सत्यको ज्ञान, निरोध सत्यको ज्ञान, मार्गसत्यको ज्ञान, धर्मज्ञान, अन्वयज्ञान, संवृत्तिसत्यको ज्ञान, परिचित्त ज्ञान, आश्रवक्षय ज्ञान *(र)* अनुत्पाद ज्ञान यी दश प्रकारका ज्ञानलाई दशज्ञान भन्दछ ।

## १३०. दशपारमिता

दान, शील, क्षान्ति, वीर्य, ध्यान, प्रज्ञा, उपाय, प्रणिधि, बल र ज्ञान यी दश वटा विषय पूर्ण गर्नुलाई दशपारमिता भन्दछ । यसमध्ये बुद्धत्व लाभ गर्नलाई सर्वाकारज्ञता प्रज्ञालाई उपाय भन्दछ । त्यस्तै नै श्रद्धालाई पनि उपाय भन्दछ । दानादि कर्ममा वीर्यलाई उपाय भन्दछ भने कुशल कर्म स्मरण गर्ने (स्मृति) लाई पनि उपाय नै भन्दछ । कर्ता, कारक*(र)* कर्म यी तीन विषयबारे कल्पना नगरि गरिएको एकाग्रता (समाधि) त्यो पनि उपाय हो भनि उल्लेख गरि राखेको छ ।[३५]

## १३१. दशबल

तथागत दशबल शब्दमा हेर्नु होला ।

## १३२. दशभूमि

प्रमुदिता, विमला, प्रभाकरी, अर्चिष्मती, सुदुर्जया, अभिमुखी, दूरङ्गमा, अचला, साधुमती र धर्ममेघा यी दश वटा भूमिहरु श्रावकमा मार्ग र फल गरेर आठ वटा लोकोत्तर भूमि जस्तै बोधिसत्वहरुलाई लाभ हुने अवस्था हुन् ।

---

[३५]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ. ४७

यस विषयमा त्रयोदश भूमि शब्दमा हेर्नमा केहि स्पष्ट हुन्छ । विशेष कुराको लागि दशभूमि सूत्रमा हेर्नु होला ।

## १३३. दु:ख

संसारमा आफूलाई मनपर्ने वस्तु केहि पनि नित्य नभएकोले दु:ख भनेर सम्भनु पर्दछ । शरीरले अनुभव गर्ने वेदनालाई दु:ख भन्दछ । बुद्धले दु:ख शब्दको *(अर्थ)* संस्कृत वस्तु (निर्मितवस्तु) को लक्षण भनेर कुनै ठाउँमा प्रयोग गर्नु भएको छ भने प्रतीत्यसमुत्पादमा अविद्याको कारण भनेर उल्लेख गर्नु भएको छ । त्यस्तै चतुरार्यसत्यमा दु:खसत्य साक्षात्कार गर्ने गरेमा क्लेश हराएर जान्छ भनेर भन्नु भएको छ ।

## १३४. दु:ख सत्य

जुनसुकै ठाउँमा जन्म लिएपनि उसलाई *(प्राणिलाई)* दु:ख भई रहन्छ भन्ने ज्ञान साक्षात्कार गरेर भगवान *(बुद्ध)* ले दु:खसत्यको घोषणा गर्नु भएको हो । *(यस विषयमा)* विशेष कुरा चतुरार्यसत्य शब्दमा हेर्नु होला ।

## १३५. दिव्यचक्षु

साधारण मानिसहरुले नदेख्ने वस्तु तथा देवता आदिले *(मात्र)* देख्ने शक्तिलाई दिव्यदृष्टि *(अर्थात्)* दिव्यचक्षु भन्दछ । यसबारे विशेष कुरा पञ्चाभिज्ञा शब्दमा हेर्नु होला ।

## १३६. दिव्यश्रोत्र

साधारण प्राणिहरुले सुन्न नसक्ने शब्द सुन्ने शक्तिलाई दिव्यश्रोत्र भन्दछ । *(यसको)* विशेष करा पञ्चाभिज्ञा शब्दमा हेर्नु होला ।

## १३७. देवानुस्मृति

बम्हलोकका देवताहरुले यो यो पुण्य गरेर गए, त्यस्ता पुण्य मैले पनि गर्न सक्छु वा गरेको छु भनेर अनेक देवताहरुलाइ स्मरण गर्ने भावनालाई देवानुस्मृति भन्दछ।

## १३८. दौर्मनस्य

मानसिक दु:ख-मनको पीडालाई दौर्मनस्य भन्दछ। यो पनि अविद्याको (अज्ञानको) कारण हो भनेर प्रतीत्यसमुत्पादमा उल्लेख छ।

## १३९. द्वादशाकार धर्मचक्र

१. यो दु:ख सत्य हो।
२. यो दु:ख आर्य सत्य थाहा पाउन योग्य छ।
३. यो दु:ख आर्य सत्य थाहा पाइसकें।
४. यो दु:ख समुदय सत्य हो।
५. यो दु:ख समुदय सत्य थाहा पाउन योग्य छ।
६. यो दु:ख समुदय सत्य थाहा पाइ सकें।
७. यो दु:ख निरोध सत्य हो।
८. यो दु:ख निरोध सत्य साक्षात्कार गर्न योग्य छ।
९. यो दु:ख निरोध सत्य साक्षात्कार गरिसकें।
१०. यो दु:ख निरोध मार्ग सत्य हो।
११. यो दु:ख निरोध मार्ग सत्य भावना गर्न योग्य छ।
१२. यो दु:ख निरोध मार्ग सत्य भावना गरिसकें।

यसरी पहिले कहिल्यै नसुनेको विषयमा एकचित्त गरि राखेको बेलामा प्रत्यक्ष भएको हुनाले प्रज्ञाचक्षु भनेर, शङ्का नभएको हुनाले ज्ञान भनेर, सत्य भएको हुनाले विद्या भनेर (र) विशुद्ध भएको हुनाले बुद्धि भनेर ममा उत्पन्न भयो भनेर भगवान बुद्धले माथि उल्लेखित १२ वटा वाक्यपिच्छे

दोहोऱ्याएर भन्नु भएकोले यसलाई **त्रिपरिवर्त द्वादशाकार धर्मचक्र** भनेको हो ।[३६]

## १४०. द्वादशाङ्ग प्रतीत्य समुत्पाद

अविद्या, संस्कार, विज्ञान, नामरुप, षडायतन, स्पर्श, वेदना, तृष्णा, उपादान, भव, जाति *(र)* जरामरण शोक परिदेव दुःख दौर्मनस्य उपायास यी १२ वटालाई **द्वादशाङ्ग प्रतीत्य समुत्पाद** भन्दछ *(र)* भवचक्र पनि भन्दछ ।

अविद्याा र संस्कार यी दुईवटा पूर्व जन्मको भएको हुनाले भूतकालको विषय हो । जाति र जरामरण आदि हामी मरेर अर्को ठाउँमा जन्म लिन जानु पर्ने हुनाले भविष्यत् कालको विषय हो । अनि विज्ञान, नामरुप, षडायतन, स्पर्श, वेदना, तृष्णा, उपादान *(र)* भव यी आठ वटा हाम्रो वर्तमान अवस्थालाई लिई राखेको हुनाले वर्तमान कालको विषय भनेर विभाजन गरि राखेको छ ।

जन्म हुनु भन्दा अगाडि म छु कि भन्ने शङ्का निवारण गर्न अविद्या र संस्कार बताउनु भयो । अहिले जन्म लिई राखेको म को हुँ भनेर चिन्नको लागि विज्ञानदेखि भवसम्म आठ वटा भन्नु भयो । जाति र जरामरण आदि दुई वटा भविष्यमा पनि म जन्म लिन जान्छु भनेर बुझाउनको लागि बताउनु भयो ।

अविद्या, तृष्णा *(र)* उपादान यी तीन वटालाई **क्लेशावर्त** भन्दछ । संस्कार र भव यी दुई वटा प्राणिले गर्ने पुण्य-अपुण्य कर्म भएकोले **कर्मावर्त** भनेर उल्लेख गरि राखेको छ । विज्ञान, नामरुप, षडायतन, स्पर्श, वेदना, जाति *(र)* जरामरण आदि यी सात वटा वस्तु (जग) फल वा विपाक भनेर पनि

---

[३६]. पूर्व पाद टिप्पणी सङ्ख्या १. पृ ३९९

उल्लेख गरि राखेको छ । अनि फेरि अविद्या र संस्कारलाई हेतु तथा जाति र जरामरणलाई फल भन्ने पनि चलन छ ।

माथिको नियम हेर्दाखेरि क्लेशले क्लेशलाई पनि उत्पन्न गरेको देखिन्छ । क्लेशले कर्म पनि गराएको देखिन्छ । अनि फेरि कर्मले वस्तुलाई उत्पन्न गरेको देखिन्छ । वस्तुले पनि वस्तुलाई उत्पन्न गरेको देखिन्छ । यो नियमलाई भवचक्रको नियम भन्दछ । यो १२ वटा अङ्गलाई प्रतीत्य समुत्पाद र प्रतीत्य समुत्पन्न पनि भन्दछ । कारण भएर उत्पन्न गराउने हुनाले प्रतीत्य समुत्पाद भनेको हो, कारण भई उत्पन्न भएकोले प्रतीत्य समुत्पन्न भनेको हो ।

यो प्रतीत्य समुत्पाद छिनछिनमा बदल्दै आएको पञ्चस्कन्धको नै अवस्था हो । केवल अविद्या आदि प्रधान भई रहेको अवस्थालाई अविद्या आदि १२ अङ्ग देखाई राखेको हो ।[३७]

दुःख हुँदा ज्ञान घटेर जाने कुरा सबैलाई थाहा छ । दुःख मध्ये मरण दुःख सबभन्दा ठूलो *(दुःख हो)* । त्यसैले मृत्यु हुने वेलामा ज्ञान हराएर जान्छ र अविद्या (मोह) उत्पति नभई छाड्दैन ।

हामीले जति पनि काम गरि रह्यौं त्यो काम सबै लोभले (रागले) गरि राखेका छौं । अथवा मन नपरि नपरि करले (द्वेपले) गरि राखेका छौं । अथवा अज्ञानको कारण चाल नपाउने गरि अविद्या *(मोह)* ले गरि रहेका छौं । त्यस्तै नै मृत्यु दुःखले आउने अविद्याले हामीलाई राम्रा नराम्रा काम (संस्कार) गराउँदछ । उहि काम *(संस्कार)* ले मरणवाद प्रतिसन्धिचित्त (विज्ञान) आमाको गर्भमा उत्पत्ति गर्दछ । अनि आमाको गर्भमा रहँदाको चित्तले (विज्ञानले) नाम (वेदना,

---

[३७]. पूर्व पाद टिप्पणी संख्या ०., पृ ५०.

संज्ञा, संस्कार *(र)* विज्ञान) *(र)* रुप -पर्थ्वी, आप, तेज *(र)* वायु) दुवै उत्पत्ति गर्दछ । अनि नाम रुपले (पञ्चस्कन्धले) षडायतन (नाक, कान, आंखा, जिब्रो, शरीर *(र)* मनोधातु) उत्पन्न गर्दछ । षडायतनले रुपादिनामस्पर्श (संयोग) उत्पन्न गर्दछ । सोहि स्पर्शको कारणले हामीलाई सुख *(र)* दुःख अनुभव हुन्छ । अनि सोहि वेदनाले (सुख दुःख) तृष्णा (मन परेको भए पाए हुन्थ्यो, मन नपरेको भए नभए हुन्थ्यो भन्ने विचार) उत्पन्न हुन्छ । अनि तृष्णाले उपादान (ग्रहण गर्ने प्रयत्न) उत्पन्न गर्दछ । सो उपादानले भव (राम्रो नराम्रो कर्म) उत्पन्न गर्दछ । सोहि कर्मले फेरि अरु ठाउँमा जन्म लिन लगाउँछ । जन्म (जाति) भएपछि नै जरामरण आदि नभइ सुख छैन भन्ने द्वादशाङ्ग प्रतीत्य समुत्पादको भाव हो ।

## १४१. द्वादशायतन

चक्षु, श्रोत्र, घ्राण, जिह्वा, काय, मन, रुप, शब्द, गन्ध, रस, स्पर्श *(र)* धर्म (मनले जान्ने विषय) यी छ वटा इन्द्रिय *(र)* छ वटा विषय (आलम्बन) लाई द्वादशायतन भन्दछ । यहाँ आयतनको अर्थ आउने बाटो (आयद्वार) वा विज्ञान (मन) बस्ने ठाउँ भएकोले पनि आयतन भनेको हो ।

## १४२. द्वितीय ध्यान

***आध्यात्मसंप्रसाद, प्रीति, सुख, चित्तै एकाग्रता चेति चतुरङ्गम् ।*** [३८]

प्रबलश्रद्धा, चित्तसंतोष, सुख *(र)* चित्तको एकाग्रता यी चार वटा द्वितीय ध्यानका अङ्गहरु हुन् । यो ध्यानमा वितर्क र

[३८]. पूर्व पाद टिप्पणी संख्या १, पृ ३६८

विचार गरि राख्नु पनि तन्ता नै हो भनेर योगीले *(वितर्क र विचार गर्ने कार्य)* छोडि दिने गर्दछ ।

## १४३. द्विविध संस्कार

चित्तसंप्रयुक्त संस्कार *(र)* चित्तविप्रयुक्त संस्कार यी दुई संस्कारको अर्थ चित्तसंप्रयुक्त र चित्तविप्रयुक्त शब्दमा हेर्नु होला ।

## १४४. द्वीप

पूर्वविदेह, जम्बुद्वीप, अपरगोदानीय *(र)* उत्तरकुरु यी चार वटा द्वीप (चारैतिर पानीले घेरी राखेको ठाउँ) पृथ्वीमा छन् भन्ने कुरा बौद्ध साहित्यहरुमा उल्लेख छन् ।

## १४५. धर्मधातु

मनले मनमा चिताइ राखेको विषयलाई धर्मधातु भन्दछ । अनि कतै निर्वाणलाई पनि धर्मधातु भनि उल्लेख गरि राखेको छ ।

## १४६. धर्म धारणी

वोधिसत्वहरुलाई लाभ हुने शक्ति (ऋद्धि)लाई **धर्म धारणी** भन्दछ *(र)* विशेष अर्थ ग्रन्थधारणी शब्दमा हेर्नु होला ।

## १४७. धर्मपद

***अनित्याः सर्वसंस्कारा ।*** (संपूर्ण संस्कृत वस्तु अनित्य हुन्), ***दुःखा सर्वसंस्काराः।*** (संपूर्ण बनि राखेका वस्तु अनित्य भइ राखेकोले दुःख हुन्), ***निरात्मानः सर्वसंस्कारा ।*** (संपूर्ण वस्तु अनित्य भएकोले अविनाशी आत्मा छैन) र ***शान्तं***

*निर्वाणं ।* (निर्वाण नै शान्ति हो) यी चार वटा बुद्धको वचनलाई धर्मपद भन्दछ ।

## १४८. धर्म प्रतिसंविद

*धर्मप्रतिसंविद पर्यायेषु तद्यथाऽविद्या दिनारभ्याज्ञानमदर्शनमनभिसमय इत्यवमादिष्वव्याघातसमृद्धौ यः समाधिः ।*[३९]

बौद्ध ग्रन्थमा उल्लेख गरि राखेको अविद्या आदि शव्दको अज्ञान, अदर्शन, अनभिसमय भन्ने पर्याय वाचि शव्दहरु भाव नबिगारिकन थाहा पाउनुलाई धर्मप्रतिसंविद भन्दछन् ।

## १४९. धर्म प्रविचय

यो सास्रव धर्म हो । यो अनास्रव धर्म हो भनेर सवै पदार्थलाई यथार्थ ज्ञान गर्नुलाई धर्मविचय भन्दछ । यसरी ज्ञान बुझेर यो कुशल, यो अकुशल भनेर चिनेर मात्रै बोधिज्ञान प्राप्त हुने हुनाले धर्मप्रविचय (प्रज्ञा) लाई बोध्यङ्ग भनि उल्लेख गरि राखेको छ ।

## १५०. धर्मानुस्मृति

भगवान बुद्धले उपदेशित धर्म राम्रो नै हो । यसै लोकमा नै फल दिने हो । संधै स्मरण गर्न योग्य कुरा हो आदि धर्म स्मरण गर्नुलाई धर्मानुस्मृति भन्दछ ।

## १५१. धर्मायतन

आँखाले ज्ञान लिने विषय - रुपलाई रुपायतन भन्दछ । आफ्नो मनले ज्ञान गर्ने विषयलाई धर्मायतन भन्दछ ।

---

[३९]. पूर्व पाद टिप्पणी संख्या ८, पृ १२८

## १५२. धूताङ्ग

पैण्डपातिक (पिण्डपात्रमा राखि दिएको मात्र खाने)

त्रैचीवरिक (सङ्घाटि, उत्तरासङ्ग *(र)* अन्तरवासक यी तीन वटा चीवर मात्र लाउने)

खलुपश्चादभक्तिक (थपेर नखाने)

नैषद्यिक (बसेर मात्र निदाउने)

यथासंस्तरिक (एउटा बिछ्यौनामा मात्र सुत्ने)

वृक्षमूलिक (रुखको मुनिमात्र बस्ने)

आभ्यवकाशिक (खुल्ला ठाउँमा मात्रै बस्ने)

श्मशानिक (मशानमा मात्र बस्ने)

पांशुकूलिक (दोपातमा मिल्काई राखेको लुगा मात्र लाउने)

आरण्यक (गाउँ शरहमा नबसि जङ्गलमा मात्रै बस्ने)

एकासनिक (एउटै ठाउँमा मात्रै बसेर खाने)

नामान्तिक ।

यी १२ वटा विशेष नियम पालना गर्नुलाई धूताङ्ग भन्दछन ।[४०]

## १५३. नवाङ्ग प्रवचन

सूत्र, गेय, व्याकरण, गाथा, उदान, जातक, बैपुल्य, अद्भूतधर्म *(र)* उपदेश यी नौ प्रकारका बुद्ध वचनहरुलाई नवाङ्ग प्रवचन भन्दछ ।

## १५४. नवानुपूर्वसमापत्ति

प्रथमध्यान, द्वितीयध्यान, तृतीयध्यान, चतुर्थध्यान, आकाशानन्त्यायतन, विज्ञानानन्त्यायतन, आकिञ्चन्यायतन,

---

[४०]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ५००

नैवसंज्ञानासंज्ञायतन *(र)* निरोधसमापत्ति यी नौ वटा *(ध्यान)* क्रमशः गर्नु पर्ने हुनाले यीनीहरूलाई नवानुपूर्व समापत्ति भन्दछ ।

## १५५. नाम

नाम*(व्यक्ति र वस्तुको नाम)*, वेदना, संज्ञा *(र)* संस्कार यी तीन वटालाई पनि नाम भन्दछ । त्यस्तै नै कुनै कुनैमा वेदना, संज्ञा, संस्कार *(र)* विज्ञान यी चार वटालाई नाम भन्दछ । निर्वाणलाई पनि नाम भन्ने चलन रहेको छ ।

## १५६. नामकाय

नामको समूहलाई नामकाय भन्दछ ।

## १५७. नामरुप

षडायतन (छ वटा इन्द्रिय) उत्पन्न हुनु पूर्व आमाको गर्भमा बसेको बेलाको वेदना, संज्ञा, संस्कार *(र)* विज्ञान यी चार स्कन्धलाई नाम भन्दछ । रुप *(भन्नाले)* रुपस्कन्ध नै भयो । त्यसैले नामरुपको अर्थ गर्भमा रहँदाखेरिको पञ्चस्कन्ध हो । विशेष अर्थ प्रतीत्यसमुत्पाद *(शब्द)* मा हेर्नु होला ।

## १५८. निरुक्ति प्रतिसंविद

*निरुक्तिः प्रतिसंविज्जनपदभाषायामितिप्रतिविषयं यथास्वमन्योन्यसंज्ञान्तरानुव्यवहारे धर्मनि वचनेचाव्याघात समृद्धौ यः समाधिः।*[४१]

---

[४१]. पूर्व पाद टिप्पणी संख्या ८, पृ १२८

धर्मलाई मिलाएर विग्रह गर्ने *(र)* व्याकरणद्वारा बोध गर्नुलाई निरुक्ति प्रतिसंविद् भन्दछ । विशेष कुरा चतुःप्रतिसंविद् शब्दमा हेर्नु होला ।

## १५९. निरोध सत्य

दुःख छेक्ने निर्वाण नै निरोध सत्य हो । विशेष कुरा चतुरार्यसत्य शब्दमा हेर्नु होला ।

## १६०. निरोध समापत्ति

चित्त चैतसिक पूर्णरुपले नष्ट हुने निर्वाण साक्षात्कार गर्ने समाधिलाई निरोध समापत्ति भन्दछ । यो समाधि अनागामि *(र)* अर्हतहरुलाई मात्र लाभ हुन्छ भनेर उल्लेख छ ।

## १६१. निर्वाण

राग, द्वेष *(र)* मोहलाई अकुशल मूल (अकुशल कर्मको जरा) भनि उल्लेख छ । राग आदि क्लेश नभएको भए शुभ अशुभ कर्म बन्दैन *(र)* पुनर्जन्म लिन नपर्ने हुन्छ । अतः रागादि क्लेशले मुक्त हुनु नै निर्वाण हो । सोपाधिशेष र अनुपाधिशेषको भेदले निर्वाण दुई प्रकारका छन् । ती दुईवटा पनि शून्यता, अनिमित, अप्रणिहित भेदले तीन प्रकारका निर्वाण हुन्छन् ।

## १६२. नीतार्थ

*शून्यता निमित्ता प्रणिहितानभिसंस्कारा जातानुत्पादभाव निरात्मनिःसत्वनिर्जीवनिपुद्गलास्वामिक- विमोक्षमुखानिर्दिष्टाः ते उच्यन्ते नीतार्थः।*[४२]

---

[४२]. श्रीधर त्रिपाठी, मध्यमक शास्त्रम् (दरभगा मिथिला विद्यापीठ, १९८७), पृ १४

शून्यता, अनिमित्त, अप्रणिहित, अनभिसंस्कृत *(र)* अजात आदि भावले वर्णन गरि राखेको नीतार्थ (परमार्थ सत्य) अनुसार उल्लेख गरि राखेको भनेर बुझ्नु पर्दछ।

## १६३. नेयार्थ

*ये सूत्रान्ता मार्गावताराय फलावतायराय च निर्दिष्टा, इमे नेयार्थ।*[४३]

मार्ग लाभ गर्न अथवा फल लाभ गर्न उल्लेखित सूत्रहरु नेयार्थ (व्यवहार सत्य) अनुसार उल्लेख गरि राखेका हुन् भनेर बुझ्नु पर्दछ।

## १६४. नैरात्म्य

पुद्गल नैरात्म्य र धर्म नैरात्म्यको भेदले नैरात्म्य दुई प्रकारका छन्।

*आत्मादिदृष्टेरुच्छेदं महत्या प्रकरोति यत्।*
*ततः पुद्गलनैरात्म्यं भगवान् सर्वथा जगौ॥*
*सर्वधर्मा अनुत्पन्ना इति कीर्तयता तथा।*
*कथितं धर्मनैरात्म्यं सर्वथा तत्ववेदिना॥*[४४]

संसार श्रृष्टि गर्ने *(र)* व्यापक भएको आत्मा छैन भन्ने भगवान बुद्धलाई ज्ञान भएपछि वहाँले पुद्गल नैरात्म्य (जन्म लिन आउने आत्मा वा सत्व) छैन भनेर घोषणा गर्नु भयो।

सर्वधर्म (संपूर्ण पदार्थ) उत्पन्न भएको छैन भनेर ज्ञान भइसकेपछि वहाँले धर्म नैरात्म्यको व्याख्यान् गर्नु भयो। *(यहि)* धर्म नैरात्म्य नै महायानको मूल विषय हो।

---

[४३]. पूर्ववत पाद टिप्पणी संख्या ४२, पृ १४

[४४]. पूर्ववत् पाद टिप्पणी संख्या १, प्रथम परिशिष्ट-प्रज्ञापारमिता पिण्डार्थ, पृ २६४, श्लोक १५ र १६

## १६५. पञ्चइन्द्रिय

श्रद्धा, समाधि, वीर्य, स्मृति र प्रज्ञा यी पाँच वटा मानसिक भावलाई बौद्ध दर्शनमा इन्द्रिय भनि उल्लेख छ । त्यस्तै कतै बल भनेर पनि उल्लेख छन् ।

*निकायस्थिति संक्लेश व्यवदानाधिपत्यत:*
*जीवितं विति श्रद्धादि पञ्चकेन्द्रियता मता: ।*[४५]

शङ्न नदिनु जीवितेन्द्रियको अधिकार हो । संक्लेश (दु:ख सुख) अनुभव गर्नु वेदनेन्द्रियको अधिकार हो । व्यवदान (रागादि क्लेशोपक्लेश नष्ट गर्ने) श्रद्धा आदि पाँच वटा इन्द्रियका अधिकार हुन् । *(जसरी)* आँखाको अधिकार रुप हेर्ने *(भए)* जस्तै यी पाँच वटा *(इन्द्रियहरु)* को पनि क्लेश उपक्लेश नष्ट गर्ने अधिकार भएकोले श्रद्धा इन्द्रिय हो भन्ने वुद्धको विचार हो ।

## १६६. पञ्चकषाय

क्लेशकषाय, दृष्टिकषाय, सत्वकषाय, आयु:कषाय *(र)* कल्पकषाय यी पाँच वटालाई पञ्चकषाय भन्दछ । यहाँ कषाय शव्दको साधारण अर्थ काँढा हो । पहिले पहिले जडीवुटीको *(काँढाको रस)* बाट रङ्गाइन्थ्यो । त्यस्तै नै हाम्रो चित्त रागादि क्लेश, सत्काय दृष्टि, सत्व, आयु *(र)* कल्पबाट पनि रङ्गाउने हुनाले यसलाई कषाय भनेको हो ।

## १६७. पञ्चचक्षु

१. मांसचक्षु (प्राणिहरुको साधारण आँखा)
२. धर्मचक्षु (धर्मलाई देख्ने आँखा)
३. प्रज्ञाचक्षु (निर्वाण देख्ने आँखा)

---

[४५]. पूर्व पाद टिप्पणी सख्या ९, पृ २१

४. दिव्यचक्षु (दिव्यदृष्टि)
५. बुद्धचक्षु (लोकोत्तर ज्ञान देखिने आँखा)
यी पांच प्रकारका आंखालाई पञ्चचक्षु भन्दछन्।

## १६८. पञ्चज्ञान

आदर्शन, समता, प्रत्यवेक्षणा, कृत्यानुष्ठान (र) सुविशुद्ध धर्मधातु ज्ञानलाई पञ्चज्ञान भन्दछ। यी पांच वटा ज्ञान बुद्धलाई प्राप्त हुने ज्ञान हुन्।

१६८.१. *बलप्रणीतमादर्शज्ञानम।*

श्रद्धादि पञ्चबलद्वारा लाभ हुने ज्ञान आदर्शनज्ञान हो।

१६८.२. *श्रद्धावीर्यस्मृतिसमाधिप्रज्ञावैशारद्यलक्षणं समताज्ञानम्।*

श्रद्धा आदि इन्द्रियलाई उचित मात्रामा प्रयोग गर्नु तथा वैशारद्य लाभ गर्ने (प्रयत्न) द्वारा लाभ हुने ज्ञानलाई समताज्ञान भन्दछ।

१६८.३. *ज्ञानप्रहाणसंक्लेशहेतूपदेशप्रतिसंवित्स्वभावं प्र- त्यवेक्षणाज्ञानम्।*

ज्ञानप्रहाण, संक्लेशहेतु, उपदेश र चतुप्रतिसंविद्द्वारा लाभ हुने ज्ञानलाई प्रत्यवेक्षणाज्ञान भन्दछ।

१६८.४. *अर्थधर्मनिरुक्तिप्रतिभानमैत्रीकरुणाकारं कृत्या-नुष्ठानज्ञानम्।*

चतुप्रतिसंबिद्, मैत्री र महाकरुणाद्वारा लाभ हुने ज्ञानलाई कृत्यानुष्ठान ज्ञान भन्दछ भनेर "अनादिनिधनो बुद्धो"को व्याख्यामा *(श्रीआर्यनामसंगीतिनाम)* मन्त्रार्थावलोकिनी टीकामा

उल्लेख गरि राखेका छन् । यसको अर्थ अद्वयपरमार्थनामसंगीति को भूमिकामा हेर्नु होला ।[४६]

## १६९. पञ्चदृष्टि

सत्कायदृष्टि, अन्तग्राहदृष्टि, मिथ्यादृष्टि, दृष्टिपरामर्श *(र)* शीलब्रत परामर्श यी पाँच वटा नराम्रा दृष्टि (विचार, सिद्धान्त वा मत) लाई पञ्चदृष्टि) भनेर भन्दछ ।

*आत्मात्मीय ध्रुवोच्छेदा नास्तिहीनाग्रोदृष्टयः ।*
*अहेत्वमार्गे तद्दृष्टि रेतास्ताः पञ्चदृष्टयः ।*[४७]

म (र) मेरो शरीर नै आत्मा हो भन्ने विचारलाई **सत्कायदृष्टि** भन्दछ । आत्मा नित्य अविनाशी वा मृत्युपछि केहि छैन जन्म लिन जानु पर्दैन भन्ने विचार नै **अन्तग्राहदृष्टि** भन्दछ । पुण्य (र) पापको फल छैन चतुरार्य सत्य (पनि) सत्य होईन भन्ने विचारलाई **मिथ्यादृष्टि** भन्दछ। आस्रव वस्तुलाई उत्तम ठान्ने दृष्टि परामर्श हो । कुमार्ग (नराम्रो बाटो) लाई सुमार्ग (राम्रो बाटो) सुमार्ग (राम्रो बाटो) लाई कुमार्ग (नराम्रो बाटो) ठान्नु नै **शीलब्रतपरामर्श** भन्दछ ।

## १७०. पञ्चबल

श्रद्धा, वीर्य, समाधि, स्मृति *(र)* प्रज्ञा यी पाँच वटालाई **पञ्चबल** भन्दछ । इन्द्रियले काम गर्ने बेलामा क्लेशलाई दवाउने हुनाले (त्यसलाई) बल भनेको हो ।

---

[४६]. दिव्यवज्र वज्राचार्य, अद्वय परमार्थनाम संगीति, (भूषण प्रकाशन-२), भूमिकामा हेर्नु होला ।
[४७]. पूर्व पाद टिप्पणी संख्या ८, पृ १३२

## १७१. पञ्चभौतिक

पञ्चमहाभूत संग संगै रहने रूप, शब्द, गन्ध, रस *(र)* स्पर्श यी पांच वटालाई पञ्चभौतिक भन्दछ।

## १७२. पञ्चमहाभूत

पृथ्वी, आप, तेज, वायु, (र) आकाश यी पांच वटालाई पञ्चमहाभूत भन्दछ। आकाश एउटा छोडेर (अन्य चार वटालाई) धातु पनि भन्ने चलन छ। यो चार वटाबाट नै सबै संसार बनि राखेको छ भन्ने बौद्ध दर्शन मात्रै होइन अन्य भारतीय दर्शनको पनि विचार हो।

पृथ्वीधातुले आकार प्रकार धारण गर्दछ। यसको स्वभाव कडा हुन्छ। आपधातुले (पानीले) दुई पदार्थलाई एकढिक्का बनाई दिने काम गर्दछ। यसको स्वभाव सरस हुन्छ। तेजधातुले (अग्निले) एउटा वस्तुबाट अर्को वस्तु बनाई पाक (पूर्णता) गर्दछ। यसको स्वभाव उष्णता हुन्छ। वायुधातुले *(हावाले)* संगै बसेको वस्तुलाई अलग गर्दछ । यसको स्वभाव गतिशीलता हुन्छ।[४८]

## १७३. पञ्चभय

आजीविका भय (जीविका नहोला कि भन्ने भय)
शोक भय (छोराछोरी, स्वास्नी आदिसंग वियोग हुने भय)
मरण भय (मृत्यु हुने भय)
दुर्गति भय (नरक जाने हो कि भन्ने भय)
पर्षद अवैशारद्य भय (कुनै सभा समारोह आदि लगायत जीवनमा आफ्नो बेइज्जत होला कि भन्न भय)
यी पाँच वटा भयलाई पञ्चभय भन्दछ।

---

[४८]. पूर्व पाद टिप्पणी सङ्ख्या ९, पृ ६

१७४. पञ्चमात्सर्य

धर्म, लाभ, आवास, कौशल र वर्ण यी पाँच वटा मलाई मात्र प्राप्त होस् अरुलाई नहोस् भन्ने कपटी स्वभावलाई पञ्चमात्सर्य भन्दछ ।

१७५. पञ्चस्कन्ध

रुपस्कन्ध, वेदनास्कन्ध, संज्ञास्कन्ध, संस्कारस्कन्ध (र) विज्ञानस्कन्ध यी पाँच वटालाई पञ्चस्कन्ध भन्दछ । (यहाँ) पञ्च भन्नाले पाँच (र) स्कन्ध (भन्नाले) समूह भन्ने अर्थ हो । अध्वः, कथावस्तु, सनिस्सार, सवस्तुक शब्दहरुको अर्थ पनि पञ्चस्कन्धको रुपमा लिएपनि हुन्छ। आश्रव नभएकोलाई पञ्चस्कन्ध भन्दछ । आश्रव भएकोलाई पञ्च उपादान स्कन्ध भन्दछ भनेर पनि जान्नु पर्दछ ।

*(१७५.१ रुपस्कन्ध)*

आँखा आदि पाँच वटा इन्द्रिय रुप आदि पाँच वटा विषय (आलम्बन) पृथ्वी आदि चार वटा महाभूतको आधारमा जीवित प्राणिहरु संग प्रवाहित रुपले सम्बन्ध भएको शुभाशुभ रुपी अविज्ञप्ति यी ११ वटाको समूहलाई रुपस्कन्ध भन्दछ ।

१७५.२. वेदनास्कन्ध

शरीरले गर्ने अनेक प्रकारका सुख, दुःख (र) उपेक्षाको अनुभवको समूहलाई वेदनास्कन्ध भन्दछ ।

१७५.३. संज्ञास्कन्ध

रातो-हरियो, लामो-छोटो भनेर चिन्ने आदिको समूहलाई संज्ञास्कन्ध भन्दछ ।

१७५.४. विज्ञानस्कन्ध

रुपहेर्ने मन-चक्षुर्विज्ञान, शब्द सुन्ने मन-श्रोत्रविज्ञान, वास सुंघ्ने मन-घ्राणविज्ञान, स्वादलिने मन-जिह्वाविज्ञान, स्पर्श गरेको थाहाहुने मन-कायविज्ञान (र) विचार र मनन गर्ने मन-मनोविज्ञान यी छ वटा विज्ञान [मन] को समूहलाइ विज्ञानस्कन्ध भन्दछ ।

१७४.५. संस्कारस्कन्ध

*(उपरोक्त)* चारवटा स्कन्धमा नपरेका सबै चेतना आदि मानसिक भावहरुको समूहलाइ संस्कारस्कन्ध भन्दछ ।

देखिने (सबै) रुपस्कन्धमा वर्णन गरि राखेको छ । वेदना, संज्ञा संस्कार (र) विज्ञानस्कन्ध चित्त चैतसिक (मन र मनसंगै आउने) भनेर उल्लेख भइराखेको छ । यसरी संसारमा सबै पदार्थ यी नै पाँचवटा स्कन्धमा अन्तर्भाव (समावेश) गरि राखेको देखिन्छ ।

## १७६. पञ्चानन्तर्यकर्म

मातृबध (आमाको हत्या), पितृबध (बाबुको हत्या), अर्हत्‌बध (अर्हत्‌को हत्या), तथागतशरीरे दुष्टचित्तरुधिरोत्पाद (मार्ने चित्ताशयले तथागतको शरीरमा घाउ पार्नु) (र) संघभेद (भिक्षुसंघलाइ अलग गर्नु वा लडाउनु)

यी पाँच वटा पापलाइ पञ्चानन्तर्यकर्म (पञ्च महापाप) भन्दछ ।

१७७. पञ्चाभिज्ञा

दिव्यचक्षु, दिव्यश्रोत्र, परचित्तज्ञान, पूर्वनिवासानुस्मृति (र) ऋद्धि यी पाँच वटा ज्ञान र शक्तिलाई पञ्चाभिज्ञा भन्दछ।

साधारण मानिसहरुले नदेख्ने, देव-भूत आदिले देख्न सक्ने शक्तिलाई दिव्यचक्षु भन्दछ। साधारण मानिसहरुले नसुन्ने देव, भूतहरु आदिका शब्दहरु पनि सुन्न सक्ने शक्तिलाई दिव्यश्रोत्र भन्दछ। अर्काको मनमा रहेका कुराहरु जान्न सक्ने शक्तिलाई परचित्तज्ञान भन्दछ। धेरै अगाडिका पूर्वजन्मका कुरा स्मरण गर्न सक्ने शक्तिलाई पूर्वनिवासानुस्मृति भन्दछ। पंछि उडे जस्तै आकाशमा उड्नु, जमिनमा हिँडे जस्तै पानीमाथि हिँड्नु, अनेक रुप लिन सक्नु (र) एकबाट सयौंको संख्यामा रुप लिन सक्नु आदि अलौकिक सिद्धिलाई ऋद्धि भन्दछ।

१७८. पञ्चाहार

ध्यानाहार, कबलिकाहार, प्रीतिआहार, स्पर्शआहार (र) संचेतनिकाहार यी पाँच वटा *(लाई)* पञ्चाहार भन्दछ।

ध्यान गर्दा भोक नलागे पनि शरीर पनि कमजोर नहुने भएकोले ध्यान पनि आहार नै हो।

दाल, भात, तरकारी आदि खाना  गाँसका गाँस (कबलिका) खाने कुरा सबैलाई थाहा नै भएको कुरा हो। (तर त्यसरी) आभास्वर देवताहरुले खानु पर्दैन। वहाँहरुले प्रीति (शरीरमा आउने तृप्ति तथा संतोषका भावहरु) लाई पनि आहार भनि उल्लेख गरि राखेको छ।

स्पर्शद्वारा तातो हुने गरि छोपि राख्दाखेरि पनि पंछि आदिका अण्डाहरु बचि रहने हुनाले स्पर्शलाई आहार भनि उल्लेख गरि राखेको छ।

पख खानुपर्छ भनेर धैर्य मात्रै लिएर पनि धेरै समयसम्म बाँचि रहन सक्ने हुनाले संचेतनाको (आश्वासन वा धैर्य) लाई पनि आहार भनि उल्लेख गरि राखेको छ।

## १७९. पदकाय

वाक्यको समूहलाई पदकाय भन्दछ।

## १८०. परचित्त ज्ञान

अर्काको मनको कुरा जान्न सक्ने ज्ञान अभिज्ञालाई परचित्त ज्ञान भन्दछ।

## १८१. परभाव शून्यता

*परेण कर्त्रा शून्यत्वात् परभावशून्यता।*[४९]

संसारलाई श्रृष्टि गर्ने कुनै श्रष्टिकर्ता छैन भनेर भावना गर्नुलाई परभाव शून्यता भन्दछ। विशेष कुरा शून्यता शब्दमा हेर्नु होला।

## १८२. परमार्थ शून्यता

*परमस्य निर्वाणस्य निर्वाणार्थरुपशून्यत्वेन परमार्थशून्यता।*[५०]

निर्वाणमा निर्वाणको विषय छैन भनेर भावना गर्नुलाई परमार्थ शून्यता भन्दछ। विशेष कुरा शून्यता शब्दमा हेर्नु होला।

---

[४९]. पूर्व पाद टिप्पणी संख्या १, पृ ३१५

[५०]. एंजन

## १८३. परमार्थ सत्य

लोक व्यवहारलाई संवृतिसत्य भन्दछ । निर्वाणलाई परमार्थसत्य भन्दछ । *(लेखकले परमार्थ सत्य बुझाउन बोधिचर्यावतारबाट पाठ उद्धरण गर्नु भएको छ जुन यस प्रकारका छन् ।)*

***यदि हि देवपुत्र परमार्थसत्यं कायवाङ्मनसां विषयतामुपच्छेत्, न तत्परमार्थसत्यमिति संख्यां गच्छेत् । संवृतिसत्य मेव तद्भवेत् । अपितु देवपुत्र परमार्थसत्यं सर्वव्यवहारसमतिक्रान्तं निर्विशेषमसमुत्पन्नमनिरुद्धं मभिधेयाभिधानज्ञेय ज्ञान विगतम् यावत्सर्वाकारवरोपेतसर्वज्ञज्ञान विषयभाव समतिक्रान्तं परमार्थसत्यमिति विस्तारः ।***[५१]

हे देवपुत्र ! साँच्चै भन्ने हो भने परमार्थसत्यलाई शरीरले, वचनले तथा मनले व्यक्त गर्न वा ज्ञान लिन सक्दैन । यदि ज्ञान लिन्छ भने त्यो पनि संवृतिसत्य नै हुन आउँछ । त्यसैले हे देवपुत्र ! परमार्थसत्य भनेको संपूर्ण व्यवहारबाट अलग्ग रहेका विशेषता केहि नभएको, उत्पत्ति र विनाश नहुने, यसको नाउँ यो हो भनेर नाउँ लिएर बताउन नहुने, ज्ञान नभएको, ज्ञानद्वारा जान्न पनि नसक्ने, सर्वाकारवरोपेत सर्वज्ञ ज्ञानभन्दा पनि माथिल्लो तत्वलाई परमार्थसत्य भन्दछ ।

## १८४. परिदेव

आलाप विलाप गरेर रुनुलाई परिदेव भन्दछ । यो पनि दुःख नै हो । यो अविद्याले उत्पन्न गर्छ भनेर प्रतीत्यसमुत्पादमा वर्णन गरि राखेको छ ।

---

५१. ..., बोधिचर्यावतार, ..., ..., पृ. १७७

## १८१. पारमिता

बुद्धत्व लाभ गर्नको लागि पूर्ण गर्न पर्ने कार्यलाई पारमिता भन्दछ । कतै दश वटा पारमिताका वर्णन गरि राखेका छन् भने कतै छ वटा पारमिताको वर्णन गरि राखेका छन् । यहाँ छ वटा पारमिताको वर्णन गरिन्छ ।

दानपारमिता:- (शाक्यमुनि बुद्धले बोधिसत्वचर्या गर्ने क्रममा) छोरा(छोरी), स्वास्नी, मुटु-फोक्सो, आँखा लगायत धनसम्पत्ति दान गर्नु भई दान पारमिता पूर्ण गर्नु भएको थियो । यसको मुख्य उद्देश्य प्राणी(हरु) प्रति (वहाँको) महाकरुणा हो ।

शीलपारमिता:- इन्द्रियहरुको चञ्चलता रोक्ने संवरशील, कुशल(कर्महरु) बटुल्ने शील तथा प्राणिहरुलाई उद्धार गर्ने शीलको भेदले तीन प्रकारका शील पूर्ण गर्नु नै शीलपारमिताले पूर्ण भएको भन्दछ ।

क्षान्तिपारमिता:- धर्म ज्ञान गर्ने शक्ति, दु:ख कष्ट सहन गर्ने शक्ति (र) अर्काले जे गरेपनि सहन सक्ने शक्तिको भेदले तीन प्रकारका क्षान्ति पूर्ण हुनु क्षान्ति पारमिता भन्दछ ।

वीर्यपारमिता:- पुण्य गर्न आरम्भ गर्दाको उत्साह, पुण्य गरि रहेको बेलाको उत्साह (र) पुण्य पूर्ण भएको बेलाको उत्साहको भेदले तीन प्रकारका वीर्यले (उत्साहले उद्योगले) पूर्ण हुनु नै वीर्य पारमिता हो । यसको मूल उद्देश्य कार्य पूर्ण गर्नु हो ।

ध्यानपारमिता:- रागादि क्लेश सिध्याउने, आनन्दले जीवन बिताउने (र) संपूर्ण ऋद्धि लाभ गर्ने भेदले तीन प्रकारका ध्यानले पूर्ण गर्नु नै ध्यान पारमिता हो । यसको मूल उद्देश्य आफ्नो र अर्काको विक्षिप्त (आकुल व्याकुल) भइ रहेको चित्तलाई एकाग्र गरि दिनु हो ।

प्रज्ञापारमिता:- पढेर आएको ज्ञान, चिन्तन मनन गरि आएको ज्ञान (र) भावना गरेर आएको ज्ञानको भेदले तीन प्रकारका ज्ञानले (प्रज्ञाले) पूर्ण हुन नै प्रज्ञापारमिताले पूर्ण हुनु हो। यसको मूल उद्देश्य एकाग्र चित्त भएका व्यक्तिहरुलाई निर्वाण साक्षात्कार गराइ दिनु हो।

नामसंङ्गीतिको दशपारमिता प्राप्त शब्दको ब्याख्या यसरि गरि राखेका छन्।

*एते दानादय: संबोधिचित्त पूर्विका सर्वसत्त्वेषु मैत्राशय भाविता पारमिता नाम लभन्ते।*

बोधिचित्त उत्पन्न गरि प्राणि(हरुको) प्रति मैत्री भावना गरेर दानादि दश वटै गर्ने (कार्यलाई) पारमिता भन्दछ।

पारमिता पनि लौकिक र लोकोत्तरको हिसाबले दुई (प्रकारका) छन्। केवल माथि उल्लेख भए गरेझैं दानादि मात्र (कार्य) गर्नुलाई लौकिक पारमिता भन्दछ। दशभूमिको हिसाबले बोधिसत्वहरुले त्रिकोटि परिशुद्धि गरेर (देय, दाता (र) प्रतिग्राहकलाई कल्पना नगरि) *(दिएको वस्तु, दिने ब्यक्ति र ग्रहण गर्नेलाई नसम्झिकन)* गरेको दानादिलाई लोकोत्तर पारमिता भन्दछ।

## १८६. पारुष्य

अर्कालाई चित्त दुख्ने गरि कडा वचन बोल्नुलाई पारुष्य भन्दछ। यो दश वटा अकुशल (पाप) मध्ये एउटा हो।

## १८७. पूर्वे निवासानुस्मृति

पूर्वजन्मका कुरा स्मरण गर्ने शक्तिलाई पूर्वे निवासानुस्मृति भन्दछ। यो पाँच अभिज्ञा(हरु) मध्ये एक हो।

## १८८. पैशुन्य

मिली गखेकालाई फाट्न चुक्लि गर्नुलाई पैशुन्य भन्दछ। यो दश वटा अकुशल (पापहरु) मध्ये एउटा हो।

## १८९. प्रकृति शून्यता

*सर्वार्यैरकृता प्रकृतिस्तस्यास्तया शून्यत्वात् प्रकृति-शून्यता तस्याः सस्कृतासंस्कृतविकाराविकारानापत्तेः।*[५२]

संस्कृत र असंस्कृत, विकार र अविकार भनेर सबै आर्यहरुले भनेर नगएका प्रकृति प्रकृतिभाव रहित भएको हुनाले त्यसलाई प्रकृति शून्यता भनेको हो। यसबारे विशेष कुरा शून्यता शब्दमा हेर्नु होला।

## १९०. प्रज्ञास्कन्ध

भगवान बुद्धले अनेक प्रकारका ज्ञानको बारे उपदेश दिनु भयो। ती सबै ज्ञान (प्रज्ञा)को समूहलाई प्रज्ञास्कन्ध भन्दछ। यसबारे विशेष कुरा लोकोत्तर पञ्चस्कन्ध शब्दमा हेर्नु होला।

## १९१. प्रतिपुद्गल

मार्ग र फल प्राप्त प्राणिलाई प्रतिपुद्गल भन्दछ। प्रतिपुद्गलहरु २० प्रकारका छन्। ती निम्नानुसारका हुन्।

श्रद्धानुसारी, धर्मानुसारी, श्रोतआपन्न, देवकुलंकुल, मनुष्यकुलंकुल, सकृदागामि, श्रद्धादृष्टिप्राप्त, एकबीचिक, अनागामी, अन्तरापरिनिर्वायी, उपपद्यपरिनिर्वायी, अभिसंस्कारपरिनिर्वायी, अनभिसंस्कारपरिनिर्वायी, ऊध्वश्रोत, प्लुत, अर्द्धप्लुत, सर्वस्थानच्युत, दृष्टधर्मशम, कायशाक्षी र खड्ग

---

[५२]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ३१५

श्रद्धानुसारी र धर्मानुसारी *(यी)* दुई जना(लाई) स्रोतआपन्नफलप्रतिपन्नक भन्दछन् । ती दुई अनि स्रोत आपन्न हुन्छन् । देव कुलंकुल र मनुष्य कुलंकुलको भेदले स्रोत आपन्न दुइ प्रकारका हुन्छन् ।

सकृदागामिफल प्रतिपन्नकलाई श्रद्धादृष्टि प्राप्ति भन्दछ । देवलोकमा एकपटक जन्म लिनुपर्ने सकृदागामिलाई एकवींचिक भन्दछ ।

अनागामिफल प्रतिपन्नकलाई पनि श्रद्धादृष्टि प्राप्त नै भन्दछ । अनि उ अनागामि हुन्छ । अन्तरापरिनिर्वायी, उपपद्यपरिनिर्वायी, अभिसंस्कारपरिनिर्वायी, अनभिज्ञसंस्कारपरिनिर्वायी (र) उर्ध्व स्त्रोतको भेदले अनागामि पाँच प्रकारका छन् । त्यसपछि फेरि उर्ध्वस्त्रोत पनि अकनिष्ट परम र भवाग्र परमको भेदले दुइ प्रकारका हुन्छन् । अकननिष्ट परम पनि प्लुत, अर्धप्लुत (र) सर्वस्थानच्युतको भेदले तीन वटा हुन्छन् । भवाग्र परम भने दृष्टधर्मशम र कायसाक्षीको भेदले दुई प्रकारका हुन्छन् । अनि अर्हत्फल प्रतिपन्नक हुन्छ । बुद्ध उत्पन्न नभएको समयमा (लोकमा) प्रत्येक बुद्ध (खड्ग) हुन्छन् । यस प्रकारले २० प्रकारका मार्ग र फलको भेदले प्रतिपुद्गलहरु छन् भनेर वर्णन गरि राखेका छन् ।[५३]

## १९२. प्रतिभान प्रतिसंविद्

***प्रतिभानप्रतिसंविद् धर्मप्रभेदेष्विति द्रव्य सन्तः प्रज्ञप्तिसन्तः संवृतिसन्तः परमार्थसन्त इत्येवमादिषु ।***[५४]

द्रव्य यति प्रकारका छन्, विज्ञान यति प्रकार *(का छन्)*, परमार्थसत्य र संवृतिसत्यका यति भेद छन् भनेर अविछिन्न

५३. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ.२९०

५४. पूर्व पाद टिप्पणी सङ्ख्या ८, पृ.१२८

रुपले धर्म व्याख्यान् गर्ने शक्तिलाई प्रतिभान प्रतिसंविद भन्दछ । यसलाई चतुप्रतिसंविदमा समावेश गरि राखेका छन् ।

## १९३. प्रतिसंख्यानिरोध

*दुःखादीनामार्यसत्यानां प्रतिसंख्यानं प्रतिसंख्या प्रज्ञाविशेषस्तेन प्राप्यो निरोधः प्रतिसंख्यानिरोधः ।*[५५]

चतुरार्यसत्यलाई ज्ञान गरेर लाभहुने चित्त (र) चैतसिकको निरोधलाई प्रतिसंख्यानिरोध भन्दछ । (यसलाई) निर्वाण पनि भन्दछ ।

## १९४. प्रथमध्यान

*सवितर्को, सविचारं विवेकजं प्रीतिसुखं चित्तैकाग्रता चेति पञ्चाङ्गं प्रथमध्यानम् ।*[५६]

तर्क-वितर्क सहितको, मनन-विचार सहितको, काम सुख रहितको तथा तृप्ति संतोष र सुखले युक्त भएको चित्तको एकाग्रतालाई पाँच अङ्ग भएको प्रथम ध्यान भन्दछ ।

## १९५. प्रदाश

*चण्डवचो दाशिता प्रदाशः ।*[५७]

मार्ने, काट्ने आदि कडा वचन बोल्ने र गालि गर्नुलाई प्रदाश भन्दछ । यो उपक्लेश मनमा आउँदा क्रोध र उपनाह पूर्वक आउने हुनाले प्रदाशलाई द्वेषको अंश मानि राखेको छ ।

---

[५५]. पूर्ववत् पाद टिप्पणी संख्या ९., पृ ४

[५६]. पूर्व पाद टिप्पणी संख्या १, पृ ३६८

[५७]. पूर्व पाद टिप्पणी संख्या २, पृ ३७

## १९६. प्रमाद

*रागादिक्लेशाच्चिताऽरक्षणं कुशताभावनं च प्रमादः ।*[५८]

रागादि क्लेशले चित्त बिगार्ने कुशल भावना नगर्नुलाई प्रमाद भन्दछ अर्थात् गर्नुपर्ने क्त्वइमा भूल गर्नु प्रमाद हो ।

## २९७. प्रश्रब्धि

*दौष्ठुल्य प्रतिपक्ष कायचितकर्मण्यता प्रश्रब्धिः ।*

रागादि बृद्धि नगर्ने काय र चित्तलाई उत्साहित तथा आनन्दित गर्ने संस्कारलाई **प्रश्रब्धि** भन्दछ । यहाँ काय शव्दको अर्थ वेदना, संज्ञा (र) संस्कार भनेका हुन् । झट्ट सुखादि वेदना अनुभव गर्नसक्ने, झट्ट चिन्नसक्ने, झट्ट आफ्नो मनको भाव चिन्न सक्नेलाई काय प्रश्रब्धि भन्दछ । राम्ररी मन राखेर वस्तुज्ञान गर्नसक्नुलाई **चित्त प्रश्रब्धि** भन्दछ । चित्त प्रश्रब्धि भएमा नै प्रीति (तृप्ति संतोष) हुन्छ । (प्रीतिबाट सुख उत्पन्न हुन्छ अनि मात्रै प्रथम ध्यान लाभ हुन्छ भन्ने ध्यानीहरुको विचार हो ।)

## १९८. प्रष्टव्य

भित्री र बाहिरी छालाले छोएर हुने ज्ञानलाई प्रष्टव्य (स्पर्श) भन्दछ । स्पर्श ११ प्रकारका छन् ।

पृथ्वी, आप(पानी), तेज, वायु, श्रलक्षणत्व (सम्मपन), कर्क (*खरखरपन),* लघुत्व (हलुङ्गोपन), गुरुत्व (गह्रगोपन), शीत(चिसो), जिघत्सा (भोक) र पिपासा (प्यास)

---

[५८]. पूर्ववत् पाद टिप्पणी सङ्ख्या २, पृ ४०

## १९९. प्राणातिपात

प्राणिको ज्यान लिनु- मानुंलाइं प्राणातिपात भन्दछन् । यो दश वटा अकुशल*(कर्म)* मध्ये एक हो ।

## २००. प्रातिहार्य

ऋद्धि प्रातिहार्य (ऋद्धि विषयक अभिज्ञा)
आदेशना प्रातिहार्य (परचित्तज्ञान आदि अभिज्ञा)
अनुशासनी प्रातिहार्य (आस्त्रव क्षयज्ञानको अभिज्ञा)
*(यी तीनलाई प्रातिहार्य भन्दछ ।)*

## २०१. प्राप्ति

*अप्राप्तस्य विनष्टस्य वा लाभ: प्राप्ति ।*[५९]

प्राप्त नभएको ध्यानादि र प्राप्त भएर पनि विनाश भएका विषयलाई लाभ गर्नुलाई प्राप्ति भन्दछ । यो चित्तविप्रयुक्तसंस्कारको विषय हो ।

## २०२. प्रार्थना

*अप्राप्तेषु कामेषु स्वाभिप्राय: प्रार्थना ।*[६०]

भोगगर्न नपाएका *(विषय)* इच्छा गर्नुलाई प्रार्थना भन्दछ।

## २०३. बहिर्धाशून्यता

शरीरभन्दा बाहिरका वस्तु शून्य हुन् भनेर भावना गर्नुलाई बहिर्धाशून्यता भन्दछ । विशेष कुरा शून्यता शब्दमा हेर्नु होला ।

---

[५९]. पूर्व पाद टिप्पणी सख्या ९, पृ ३३

[६०]. पूर्व पाद टिप्पणी सख्या १, पृ ४७८

२०४. बुद्धानुस्मृति

भगवान बुद्ध अर्हत् हुन् आदि बुद्धको संपूर्ण गुण सम्झने भावनालाई बुद्धानुस्मृति भन्दछ।

२०५. बोधिचित्तोत्पाद

जगत उद्धार गर्न म बुद्ध हुन सकुँ भनेर प्रणिधान गर्नु र आफ्नो गृहस्थी भाव छोडेर प्रवजित भई प्रस्थान गर्नुलाई बोधिचित्तोत्पाद भन्दछ। विशेष कुरा कुशल मूल शब्दमा हेर्नुहोला।

२०६. बोधिज्ञान

*क्षयानुत्पादयोर्ज्ञानं बोधिः।*[६१]

आस्त्रव क्षय ज्ञान र अनुत्पाद ज्ञानलाई बोधिज्ञान भन्दछ। श्रावकबोधि, प्रत्येक बुद्धबोधि *(र)* अनुत्तर सम्यक सम्वोधिको भेदले बोधिज्ञान तीन प्रकारका छन्।

२०७. बोधिसत्व दशबल

अधिमुक्तिबल (दृढ निश्चय गर्नसक्ने बल), प्रतिसंख्यानबल (चतुरार्य सत्यलाई ज्ञानगर्ने बल), भावबल, क्षान्तिवल, ज्ञानबल, प्रहाणबल (रागादि क्लेश सिध्याउने वल), समाधिबल, प्रतिभानबल (नरोक्ने किसिमले धाराप्रवाह *(गरि)* धर्मको भेद-प्रभेद व्याख्यान् गर्ने बल), पुण्यबल र प्रतिपत्ति बल यी दश वटा बललाई बोधिसत्वहरु बल भन्दछन्।

---

[६१]. पूर्व पाद टिप्पणी सङ्ख्या ९., पृ १८७

## २०८. बोधिसत्व दशवशिता

आयुर्वशिता (आयु आफ्नो अधिनमा राख्नसक्नु)
चित्तवशिता (चित्त आफ्नो अधिनमा राख्नसक्नु)
परिस्कारवशिता (अष्टपरिष्कार अधिनमा राख्नसक्नु)
धर्मवशिता (धर्म अधिनमा राख्नसक्नु)
ऋद्धिवशिता (ऋद्धि अधिनमा राख्नसक्नु)
जन्मवशिता (ईच्छा भएको ठाउँमा जन्मलिन सक्नु)
अधिमुक्तिवशिता (दृढ निश्चय गर्नसक्नु)
प्रणिधानवशिता (आफूले चाहे जस्तो अधिष्ठान गर्नसक्नु)
कर्मवशिता (कुशल अकुशल कर्म आफ्नो अधिनमा राख्नसक्नु)
ज्ञानवशिता (जान्नुपर्ने *(ज्ञान)* जान्नसक्नु)
यी *(दश वशिता)* बोधिसत्वहरुको अधिनमा हुन्छन् ।

## २०९. भव

खाने, पिउने, आदि तृष्णाले गर्ने गर्न हुने-नहुने कर्म नै भव हो । यसै कर्मको कारणले हामी अरु ठाउँमा जन्म लिन जानु पर्ने हो भनेर प्रतीत्यसमुत्पादमा उल्लेख छ ।

## २१०. भाव शून्यता

*भावस्योपादानस्कन्धलक्षणस्य तेन शून्यत्वाद् भाव-शून्यता ।*[६२]

उपादनस्कन्धलाई भाव भन्दछ । उपादान स्कन्धको उपादान स्कन्ध छैन भनेर भावना गर्नुलाई भाव शून्यता भन्दछ । विशेष कुरा शून्यता शब्दमा हेर्नु होला ।

---

[६२]. पूर्व पाद टिप्पणी सख्या १, पृ ३१५

२११. मति

*उपपरीक्ष्ये वस्तुनि योगायोगविहितोऽन्यथा वेतिप्रविच- यो मतिः ।*[६३]

मन लगाएर परिक्षा गरेर ठीक वा बेठीक भनेर वस्तु चिन्नुलाई मति (बुद्धि) भन्दछ । *(यसलाई)* प्रज्ञा वा ज्ञानपनि भन्दछ ।

२१२. मद

*स्वसंपतौ रक्तस्योद्धर्षश्चेतसो पर्यादानं मदः ।*[६४]

कुल, आयु आरोग्य, रुप, यौवन, बल *(र)* धनले म सम्पन्न छु भनेर फुरुङ्ग भई चित्त मात्तिनुलाई मद भन्दछ । मदको कारणले गरेर मानिसहरुको क्लेश-उपक्लेशहरु वृद्धि हुन जान्छ ।

२१३. मन आयतन

मनोविज्ञान (मन) रहने स्थानलाई मन आयतन भन्दछ । *(यसलाई)* मन इन्द्रिय पनि भन्दछ । विशेष अर्थ द्वादशायतन शव्दमा हेर्नु होला ।

२१४. मनोधातु

मन इन्द्रियलाई नै मनोधातु भन्दछ । *(यस विषयमा)* अष्टादश धातु शब्दमा हेर्नु होला ।

२१५. मनस्कार

*चेतस आभोगो मनस्कार ।*[६५]

---

[६३]. पूर्ववत् पाद टिप्पणी सख्या १, पृ ३१

[६४]. ऐजन, पृ ३१.

आलम्वनमा (विषयमा) मन गर्नुलाई मनस्कार भन्दछ। मनस्कारले गर्दा नै तल्लो भागमा पानी बगेजस्तै आलम्बनमा वारंवार मन जाने हो।

## २१६. मनोविज्ञानधातु

मनन र विचार गर्ने मनलाई मनोविज्ञान भन्दछ।

अरु अरु दर्शनमा मन एउटालाई मात्र मान्यता दिइ राखेको छ। बौद्ध दर्शनमा मन अनेक प्रकारका छन्। आँखाले देख्ने मन, नाकले बास्नालिने मन, कानले स्वर सुन्ने मन, जिब्रोले स्वाद लिने मन (र) छालाले स्पर्श गर्दा चाल पाउने मन आदि। माथि उल्लेखित इन्द्रियको सहायता नलिइ भूत, भविष्यत् *(र)* वर्तमान तीन कालका विषयलाई मनन गर्ने मन नै मनोविज्ञान हो।

## २१७. मन्त्रधारणी

*(कण्ठस्थ भई रहने शक्ति वा धारण भई रहनेलाई **मन्त्रधारणी** भन्दछ।)* बोधिसत्वहरुलाई लाभ हुने चार प्रकारका धारणीहरु मध्ये एउटा धारणी (कण्ठस्थ भई रहने शक्ति) हो। *(यसको)* विशेष कुरा ग्रन्थ धारणी शब्दमा हेर्नु होला।

## २१८. महाशून्यता

***दशानां दिशां दिग्भिः शून्यत्वेन महाशून्यता।***[६६]

दश वटा दिशाहरुका वास्तविक दिशा छैन भनेर भावना गर्नु महाशून्यता भन्दछ। विशेष अर्थ शून्यता शब्दमा हेर्नुहोला।

---

[६५]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ २३

[६६]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ३१५

### २१९. मिथ्यादृष्टि

स्वर्ग-नरक छैन (र) पाप-पुण्यको फल छैन भन्ने दृष्टि (विचार) लाई मिथ्यादृष्टि भन्दछ।

### २२०. मुदिता

अर्काको राम्रो भएको र उन्नति भएको देखेर हर्ष गर्नुलाई मुदिता भावना भन्दछ। विशेष अर्थ चतुब्रम्हविहारमा हेर्नु होला।

### २२१. मृषावाद

असत्य झुट्टो कुरा गर्नुलाई मृषावाद भन्दछ। दश वटा अकूशलहरु मध्ये यो एक हो।

### २२२. मात्सर्य

*दानविरोधि चेतस आग्रहो मात्सर्यम्।*[६७]

दान दिन मन नहुने कपति स्वभावलाई मात्सर्य भन्दछ।

### २२३. माया

*परवञ्चनायाभूतार्थसंदर्शनतता माया।*[६८]

अर्कालाई छकाउनको लागि छलकपट गरेर, (आफूसंग) नभएका शील आदि भए जस्तै व्यवहार गर्नुलाई माया भन्दछ। यो उपक्लेश राग र मोहको अंश भने पनि हुन्छ।

---

[६७]. पूर्व पाद टिप्पणी संख्या २, पृ ३८

[६८]. ऐजन

## २२४. मार्गसत्य

दु:ख रोक्ने (दु:ख निरोध) गर्ने उपाय वा बाटो (मार्ग) अष्टाङ्गिक मार्ग नै मार्गसत्य हो। बुद्धले उपदेश दिनु भएका चार वटा सत्यहरु मध्ये एक मार्गसत्य हो।

## २२५. मैत्री

प्राणिहरुको हित सुख होस्, शत्रुहरु नहोस् आदि भावना गर्नुलाई मैत्री भावना भन्दछ। विशेष कुरा चतुब्रम्ह विहार शब्दमा हेर्नुहोला।

## २२६. मोह

*अपायेषु सुगतौ निर्वाणे तत्प्रतिष्ठापकेषु हेतुषु तेषां च विपरीते हेतु फल संबन्धेऽज्ञानं मोहः।*[६९]

स्वर्ग, नरक, निर्वाण र स्वर्ग-नरक जाने पाप-पुण्यको विषय प्रतीत्यसमुत्पादको पनि ज्ञान नहुनुलाई मोह भन्दछ।

## २२७. म्रक्ष

*आत्मनोऽवद्यप्रच्छाच्छनं म्रक्षः।*[७०]

आफ्नो दोष छोप्ने भावलाई म्रक्ष भन्दछ। म्रक्षले सत्य कुरा प्रकाशमा नल्याउने हुनाले यसलाई मोहको अंश भन्दछ।

## २२८. रस

मधुर (गुलियो-मिठो), अम्ल (अमिलो), लवण (नुनिलो), कटु (पिरो), तिक्त (तितो) *(र)* कषाय (टर्रो) जिब्रोबाट स्वाद लिएर ज्ञान हुने यी छ वटालाई रस भन्दछन्।

---

[६९]. पूर्व पाद टिप्पणी संख्या २, पृ ३५

[७०]. ऐजन, पृ ३५

## २२९. रसधातु

जिब्रोबाट स्वाद लिएर ज्ञान हुने छ वटा रसलाई रसधातु भन्दछ ।

## २३०. रसायतन

जिब्रोबाट स्वाद लिएर ज्ञान हुने छ वटा रसलाई रसायतन पनि भन्दछ ।

## २३१. रुप

वर्ण *(रङ्ग) (र)* संस्थान (आकार) को भेदले रुप दुई प्रकारका छन् । वर्ण *(निम्न)* चार प्रकारका छन् ।

नील (निलो), पीत (पहेंलो), अवदात (सेतो) र लोहित (रातो) *(हुन्)* ।

संस्थान (आकार) *(निम्न १६ प्रकारका छन् ।)*

दीर्घ (लामो), हृस्व (छोटो), वृत्त (गोलो), परिमण्डल (डल्लो), उन्नत (अग्लो), अवनत (होचो), सात (समथर), विसात (उबडखाबड), अभ्र (बादल) । धूम (धुवाँ), रज (धुलो), महिका (हुस्सु), छाया (छायाँ), आतप (घाम), आलोक (चन्द्रमा, आगो आदिको किरण) र अन्धकार (अँध्यारो) ।

यसरी रुप २० प्रकारका छन् । यिनीहरुलाई नै रुपायतन भन्दछन्

## २३२. रुपधातु

आँखाले देख्ने रुपलाई रुपधातु पनि भन्दछ रुपायतन पनि भन्दछ ।

## २३३. रुपस्कन्ध

पञ्चइन्द्रिय र त्यससंग सम्बन्धित निम्न ११ वटा विषयलाई रुपस्कन्ध भन्दछ ।

चक्षु (आँखा), श्रोत्र (कान), घ्राण (नाक), जिव्हा (जिब्रो), काय (शरीर), रुप, शब्द, गन्ध, रस, स्पर्श र अविज्ञप्ति (चार वटा महाभूतको प्रवाह रुप)।

यसै रुपस्कन्धमा विज्ञान, संस्कार, वेदना *(र)* संज्ञास्कन्ध मिलेर पञ्चस्कन्ध जोड्न गई प्राणि सृष्टि भएको हो।

## २३४. रुपायतन

आँखाले देख्ने रुपलाई नै रुपायतन भन्दछ।

## २३५. रुपावचर देवता

ब्रम्हकायिक, ब्रम्हपुरोहित *(र)* महाब्रम्हा यी तीन प्रकारका देवताहरु प्रथम ध्यानभूमिका देवताहरु हुन् भन्दछन्।

परीत्ताभा, अप्रमाणाभा *(र)* आभास्वर यी तीन प्रकारका देवताहरु द्वितीय ध्यानभूमिका (देवताहरु) हुन् भन्दछन्।

परीत्तशुभ, अप्रमाणशुभ (र) शुभकृत्स्न यी तीन प्रकारका देवताहरु तृतीये ध्यानभूमिका *(देवताहरु)* हुन् भन्दछन्। अनभ्रक, पुण्यप्रसव, वृहत्फल, अवृहा, अतप, सुदृश, सुदर्शन *(र)* अकनिष्ट यी आठ प्रकारका देवताहरु चतुर्थ ध्यानभूमिका *(देवताहरु)* हुन् भन्दछन्। यी १७ प्रकारका देवताहरुलाई रुपावचर देवता पनि भन्ने चलन छ।

माथि उल्लेखित देवताहरुको भेदले ब्रम्हा पार्स (देवता)को रुपमा पनि नाम आएको देखिन्छ। असंज्ञिसत्वको नामपनि आएको छ (भने) कहिं शुद्धावासिक देवताको भेद नै अबृहा आदि पाँच वटा मानि आएको देखिन्छ।

## २३६. लक्षण शून्यता

*रुपादिलक्षणस्य रुपादेस्तल्लक्षण शून्यत्वाल्लक्षण शून्यता ।*[७१]

रुपको लक्षणमा रुप नभएकोले रुप शून्य हो भनेर भावना गर्नुलाई लक्षण शून्यता भन्दछ । *(यस)* विषयमा शून्यता शब्दमा हेर्नुहोला ।

## २३७. लोकद्वय

सत्वलोक र भाजनलोकलाई लोकद्वय भन्दछ । प्राणिहरुलाई सत्वलोक भन्दछ । पृथ्वी आदिलाई भाजनलोक (बस्ने ठाउँ) भन्दछ ।

अवकाश लोक (खालि भएको आकाश) लाई पनि लोक मानेर तीन वटा लोकको पनि करा पाईन्छन् ।

## २३८. लोकोत्तर पञ्चस्कन्ध

*अनाश्रवं शीलं समाधि: प्रज्ञा च शीलस्कन्ध:, समाधिस्कन्ध: प्रज्ञास्कन्ध: । सर्वावरणप्रहाणं विमुक्तिस्कन्ध: । विशिष्टज्ञानसाक्षात्कारणं विमुक्तिज्ञानदर्शनस्कन्ध: ।*[७२]

शीलस्कन्ध, समाधिस्कन्ध, प्रज्ञास्कन्ध, विमुक्तिस्कन्ध *(र)* विमुक्तिज्ञानस्कन्ध यी पाँच वटा स्कन्ध (समूह) लाई लोकोत्तरपञ्चस्कन्ध भन्दछ ।

आस्रव नभएको सबै शीलका समूहलाई शीलस्कन्ध भन्दछ । आस्रव नभएको सबै प्रज्ञा (ज्ञान)को समूहलाई प्रज्ञास्कन्ध भन्दछ । क्लेशावरण र ज्ञेयावरण सबै हताउनेलाई विमुक्तिस्कन्ध भन्दछ ।

---

[७१]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ३१५

[७२]. एेजन

निर्वाण (विशेषज्ञान) लाई साक्षात्कार गर्नेलाई विमुक्ति ज्ञान दर्शन स्कन्ध भन्दछ।

## २३९. विकल्प

विकल्प (संकल्प) तीन प्रकारका छन्। सम्झनु-कल्पना गर्नुलाई अनुस्मरण विकल्प भन्दछ। विचार गर्नु निर्णय गर्नुलाई संतीरण विकल्प भन्दछ। स्वाभाविक रुपले आएको अपूर्वको विकल्पलाई सहज विकल्प भन्दछ।[३३]

## २४०. विचार

*प्रत्यवेक्षकोमनोजल्पः प्रज्ञाचेतनाविशेषो विचार।*[३४]

यो के हो ? भनेर वितर्क गरि सकेपछि *(आएको)* आलम्बनको निर्णय गर्नु विचार हो।

## २४१. विज्ञप्ति

विज्ञापन गर्नु वा बोध गराउनुलाई विज्ञप्ति भन्दछ। विज्ञप्ति दुई प्रकारका छन्। *(ती निम्नानुसारका हुन्)*

हात खुट्टा चलाएर आकारबोध गराउनुलाई कायविज्ञप्ति भन्दछ। मुखबाट शब्द निकालेर बोध गराउनुलाई वाक्विज्ञप्ति भन्दछ।

## २४२. विज्ञान

द्वादशाङ्ग प्रतीत्यसमुत्पाद अनुसार गर्भमा रहेको प्राणिको सवभन्दा पहिलो मन नै विज्ञान हो। त्यसलाई प्रतिसन्धि चित्त पनि भन्दछ।

---

[३३]. पूर्व पाद टिप्पणी सङ्ख्या ८, पृ २२

[३४]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ४१

## २४३. विज्ञान स्कन्ध

चक्षुर्विज्ञान, श्रोत्रविज्ञान, घ्राणविज्ञान, जिह्वाविज्ञान, कायविज्ञान (र) मनोविज्ञान यी छ वटा विज्ञान (मन)को समूहलाई विज्ञानस्कन्ध भन्दछ ।

## २४४. वितर्क

*पर्येषको मनोजल्प: प्रज्ञा चेतनाविशेषोवितर्क ।*[७५]

यो के हो ? भनि निर्णय गर्नको लागि हुने मनको तर्कना नै वितर्क हो । तर्कना गर्दा ज्ञानले गुण-दोष छुट्याउन प्रयत्न गरि रहन्छ । चेतनाले मनलाई स्पन्दन (कम्पन) गरि रहन्छ । वितर्कको संकल्प-विकल्प गरि रहने स्वभाव भएको हुनाले विचार भन्दा यसको स्थूलता छ भनि उल्लेख छ ।

## २४५. विमुक्ति ज्ञान दर्शनस्कन्ध

विभिन्न व्यक्तिहरुले विभिन्न प्रकारका मोक्ष (निर्वाण) लाई साक्षात्कार गरि राख्छन् । त्यस्ता विमुक्ति ज्ञान दर्शन (निर्वाण साक्षात्कार) का समूहलाई विमुक्ति ज्ञान दर्शन स्कन्ध भन्दछ । विशेष कुरा लोकोत्तर पञ्चस्कन्ध शब्दमा हेर्नु होला ।

## २४६. विमुक्तिस्कन्ध

रागादि संपूर्ण आवरणलाई सिध्याउने मोक्षका समूहलाई विमुक्ति स्कन्ध भन्दछ । विशेष कुरा लोकोत्तर पञ्चस्कन्ध शव्दमा हेर्नु होला ।

---

[७५]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ४०

## २४७. विमोक्ष

शून्यता, अनिमित्त *(र)* अप्रणिहितको भेदले विमोक्ष (निर्वाण) तीन प्रकारका छन् ।

घडा पाङ्ग्रा आदि नामहरु कल्पना गरि गरेका हुन् । ती नामहरु कल्पित मात्र हुन् वास्तवमा ती सबै माटो हुन् । त्यसैले ती सानाठूला घडाहरु शून्य हुन् भनेर भावना गर्नुलाई शून्यता समाधि (शून्यता विमोक्ष मुख) भन्दछ । सो समाधिबाट लाभ भएको ज्ञानलाई शून्यता विमोक्ष भन्दछ ।

सम्पूर्ण वस्तु छन् भन्ने केवल मायाजाल-इन्द्रजाल जस्तै हुन् भनेर कुनैपनि वस्तुको निमित्त ग्रहण नगर्ने भावनालाई अनिमित्त समाधि (अनिमित्त विमोक्ष मुख) भन्दछ । सो समाधिबाट लाभ भएको निर्वाणलाई अनिमित्त विमोक्ष भन्दछ ।

आत्मा छ र वस्तु पनि छ भन्ने धारणा मात्रै हुन् । यी सबै परतन्त्र रहेछन् । यिनीहरुको स्व अस्तित्व छैन । केवल प्रतीत्यसमुत्पन्न वस्तु मात्रै हो भनेर भावना गर्नु *(लाई)* अप्रणिहित समाधि (अप्रणिहित विमोक्षमुख) भन्दछ । यसै समाधिबाट लाभ भएको निर्वाणलाई अप्रणिहित विमोक्ष भन्दछ ।

## २४८. विहिंसा

*सत्वविहेठना विहिंसा ।*[७६]

पिटेर, बाँधेर *(र)* काटेर (आदि) अनेक प्रकारले प्राणिहरुलाई हिंसा गर्नुलाई विहिंसा भन्दछ ।

---

[७६]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ३०.

## २४९. विषय

रुप, शब्द, गन्ध, रस, स्पर्श *(र)* धर्म (मनको विषय) यी छ वटालाइ विषय, आलम्बन (र) गोचर पनि भन्दछ।

## २५०. वीर्य

*कुशले चेतसोऽभ्युत्साहो वीर्यम् ।*[७७]

कुशलकर्ममा मनको उत्साहलाई वीर्य भन्दछ।

## २५१. बृद्धालोकसमाधि

यो समाधि बोधिसत्वहरुलाई लाभ हुने समाधि हो। विशेष अर्थ अधिमुक्ति चर्याभूमि शब्दमा हेर्नु होला।

## २५२. वेदना

इन्द्रिय, विषय, विज्ञान (छ वटा मनका प्रकारहरु) स्पर्श (संयोग) हुँदा हुने अनुभवलाई वेदना भन्दछ। सुख वेदना, दु:ख वेदना *(र)* अदु:खा सुखवेदना यी तीन वटालाई त्रिवेदना भन्ने चलन रहेको छ। सुख वेदना हुँदा यसरी सँधै भइ रहे हुन्थ्यो भन्ने इच्छा हुन्छ। दु:ख वेदना हुँदा यसरी कहिल्यै नभए हुन्थ्यो भन्ने इच्छा हुन्छ। अदु:खासुख वेदना (दु:खपनि नभएको सुखपनि नभएको अनुभव) भएपनि नभएपनि वास्ता हुँदैन। यो वेदनालाई उपेक्षा पनि भन्दछ।

माथि उल्लेखित तीन वटा वेदना शरीरले *(अनुभव)* गर्ने हुन्। मनले *(अनुभव)* गर्ने सुखलाई सौमनस्य भन्दछ भने दु:खलाई दौर्मनस्य भन्दछ। यसरी मनले गर्ने र शरीरले अनुभव गर्ने वेदना जम्मा पाँच प्रकारका छन्।

---

७७. पूर्ववत् पाद टिप्पणी संख्या २, पृ. ३३

## २५३. वेदनास्कन्ध

नाक, कान आदि संपूर्ण मन र शरीरले अनुभव गर्ने सुख, दुःख, उपेक्षा, सौमनस्य *(र)* दौर्मनस्य वेदनाहरूको समूहलाई वेदना स्कन्ध भन्दछ।

## २५४. व्यञ्जन काय

क, ख आदि अक्षरलाई व्यञ्जन भन्दछ। व्यञ्जनको समूहलाई व्यञ्जनकाय भन्दछ।

## २५५. व्यापाद

अर्कालाई बिगार्ने, नराम्रो गर्ने विचारलाई व्यापाद भन्दछ। यी दश वटा अकूशल *(कर्म)* मध्ये मनले गर्ने *(एक)* अकुशल (कर्म) हो।

## २५६. शब्द

कानले सुन्ने स्वरलाई शब्द भन्दछ। सा, रे, ग, म, प, ध र नी यी सात वटा प्राणी र अप्राणी स्वरको भेदले १४ वटा *(हुन्छन्)*। त्यसमा पनि राम्रो र नराम्रो भेदले २८ वटा हुन्छ।[७८]

## २५७. शब्दधातु

कानबाट सुनिने शब्दलाई नै शब्दधातु भन्दछ।

---

[७८]. धर्मसंग्रहःमा निम्नानुसारका अट्ठाइस शब्दहरु-

सप्तपुरुषवाक्शब्दाः- व्यक्तिको बोलिबाट निस्कने सात शब्दहरु

सप्तपुरुषहस्तादिशब्दाः- व्यक्तिको हातआदिबाट निस्कने सात शब्दहरु

एत एव मनोज्ञामनोज्ञभेदेनाष्टाविंशतिः- ती पनि सुखदायी र दुःखदायी शब्दका हिसाबले २८ प्रकारका शब्दहरु छन्।

द्रष्टव्य :

नरेश मान बज्राचार्य (सं.), बद्रीरत्नकृतभाष्योपेतः नागार्जुनपादविरचितः धर्मसंग्रह (प्रथमो भाग), (काठमाडौं, त्रिरत्न प्रकाशन, २०६२), पृ.६९

## २५८. शब्दायतन

कानबाट सुनिने शब्दलाई शब्दायतन पनि भन्ने चलन छ ।

## २५९. शाठ्य

*स्वदोष प्रच्छादनोपऽयसंगृहीत चेतसः कौटिल्यं शाठ्यम् ।*[४०]

आफ्नो दोष छोप्नको लागि सक्रिय हुने मनको कुटिलतालाई शाठ्य भन्दछ । म्रक्षले आफ्नो दोष मात्र छोप्छ । शाठ्यले आफ्नो दोष छोपेर अर्कालाई धोका *(दिने छल्ने)* समेत गर्छ । त्यसैले यसलाई राग र दोषको अंश भनेर भन्दछ ।

## २६०. शिक्षा

भगवान बुद्धले दिनु भएको ध्यान (तथा) समाधिका शिक्षालाई अधिचित्त शिक्षा भन्दछ । इन्द्रिय संवर आदि शीलका शिक्षालाई अधिशील *(शिक्षा)* भन्दछ । (त्यस्तै) विदर्शना आदिका शिक्षालाई अधिप्रज्ञा शिक्षा भन्दछ । यस प्रकारले तीन प्रकारका शिक्षा छन् ।

## २६१. शीत नरक

अर्बुद, निरर्बुद, अटट, अपप (हहव), हाहाधर (हुहुव), उत्पल, पद्म *(र)* महापद्म यी आठ वटा नरकलाई शीतनरक भन्दछन् ।

---

४०. पूर्व पाद टिप्पणी संख्या २, पृ. ३८

## २६२. शीलस्कन्ध

विभिन्न उद्देश्यले भगवान् बुद्धले इन्द्रिय संवरशील, आजीव परिशुद्धशील, प्रत्यय सन्निश्रितशील, संभारशील, कुशल संग्रहशील (एवं) सत्वार्थ क्रियाशील आदि उपदेश दिनुभयो। ती सबै शीलको समूहलाई शीलस्कन्ध भन्दछ।

## २६३. शीलानुस्मृति

पहिलेका बोधिसत्वहरुले धेरै नै शील पालन गर्नुभयो, मैलेपनि त्यस्तै नै शील पालन गर्नु पर्छ भनेर शीलको गुण स्मरण गर्नुलाई शीलानुस्मृति भन्दछ।

## २६४. शून्यता

निःस्वभावलाई शून्यता भन्दछ । संसारमा भएका पदार्थका परिकल्पित स्वभाव, परतन्त्रस्वभाव, परिनिष्पन्न स्वभाव मध्ये कुनै एक स्वभाव हुन्छ। यहाँ स्वभावको अर्थ अस्तित्व (आफ्नोपन छ भन्ने भएको भाव) भन्ने हो। कुनै वस्तूको हामीहरुले नामाकरण गरि राख्छौं त्यो नाउँ नै हाम्रो कल्पना मात्रै हो। कसरी भने कुनै मानिस जन्मनु भन्दा अगाडि उसको कुनै नाम हुँदैन। अनि उसलाई उसको आमाबाबुले रत्न, हेरा आदि नामाकरण गर्दछन्। सो नाउँ आमाबाबुहरुको कल्पना मात्रै भएको हुनाले त्यस्ता नाउँलाई परिकल्पित स्वभाव भन्दछ। यो परिकल्पित स्वभाव विचार गरेर हेरेको खण्डमा वास्तवमा (त्यसको वास्तविक अस्तित्व) नभएकोले नामले कल्पना गरि नाउँ राखेका सबैलाई निस्वभाव (शून्यता) भनेको हो। वालकलाई रत्न भनेर नामाकरण गरि राखेको नाउँ कल्पना मात्र हो वास्तवमा त्यो छैन *(बालक साँच्चै रत्न होईन)*। मासु, रगत र हाडको ढिस्को छैन भनेको होईन।

संसारका सबै वस्तु कुनै कारण (हेतु प्रत्यय) द्वारा परिवर्तन भइराख्दछ । कसरी भने - दुधमा दहिको बीउ अलिकति राखि दियो भने दहि बन्दछ । त्यस्तै नै सक्खरमा आवश्यकतानुसार पानी र मर्चा *(रक्सीको बीउ)* राखि राखेमा रक्सी बन्दछ । ती दहि र रक्सीको आफ्नो अस्तित्व छैन । दहि र मर्चा *(रक्सीको बीउ)* को कारणले दहि र रक्सी बनेका हुन् । त्यसैले दहि वस्तुको र रक्सी भन्ने वस्तुको स्वभावलाई परतन्त्र स्वभाव भन्दछ । आफ्नो स्वभावमा स्वतन्त्रपन नभएको हुनाले यसलाई पनि नि:स्वभाव *(शून्यता)* भन्दछ । यसै प्रकारले हेतु प्रत्ययद्वारा बनिराखेका प्राणी-अप्राणी सबै निस्वभाव सिद्ध हुन आउँछन् ।

योगीहरुले प्रतीत्यसमुत्पन्न (हेतु प्रत्ययले बनेको) सम्पूर्ण वस्तुमा ग्राह्य, ग्राहक (ग्रहण गर्न योग्य र ग्रहण गर्ने तथा म (र) मेरा) भन्ने भाव विलकुल छैन भनेर देखिने स्वभावलाई परिनिष्पन्न स्वभाव भन्दछ । यसलाई परमार्थ र तथता पनि भन्दछ । यो परिनिष्पन्न स्वभाव स्वत: आकाश जस्तै निर्मल अविकार भएकोले यसलाई पनि निस्वभाव (शून्यता) भनि उल्लेख गरि राखियो ।[८०]

यी नै नि:स्वभावलाई बोधिसत्वहरुले लाभ गर्ने अधिमुक्ति चर्या र प्रमुदिता आदि भूमिदेखि लिएर बुद्धभूमिसम्म २० प्रकारले विदर्शना -विपश्यना) भावना गर्नेलाई विंशति शून्यता भन्दछ । यो कुरा हरिभद्रले प्रज्ञापारमिता टीकामा यसरी उल्लेख गरिराखेको छ ।[८१]

बोधिसत्वले उपाय कौशल बुझिसकेपछि ज्ञानसंभार (प्रज्ञाको अभ्यास) पूर्ण गर्नु पर्दछ । त्यसर्थ बोधिसत्वहरुले

---

[८०]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ५०

[८१]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ३१५

विंशति शून्यताका अभ्यास गर्दछन् । अध्यात्म शून्यता आदि २० प्रकारका शून्यता निम्नानुसारका छन् ।

## २६४.१. अध्यात्म शून्यता

*आध्यात्मिकानां चक्षुरादीनामकूटस्थाविनाशितां प्रकृतिमुपादाय अध्यात्म शून्यता ।*

शरीरमा भएको आँखा, नाक आदि इन्द्रियलाई वस्तु भन्दछ । सो अध्यात्म वस्तुमा अकूटस्थ सत्यता अविनासिता (नित्य) स्वभाव छैन भनेर गर्ने भावनालाई अध्यात्म शून्यता भन्दछ ।

## २६४.२. बहिर्धा शून्यता

*बाह्यानां रुपादीनां तथाऽकुटस्थाविनाशितां प्रकृतिमुपादाय बहिर्धाशून्यता ।*

रुप, रस आदि शरीरको बाहिर रहेको सबै विषय सत्य होईन नित्य होईन, भनेर भावना गर्नुलाई बहिर्धा शून्यता भन्दछ ।

## २६४.३. अध्यात्म बहिर्धा शून्यता

*अध्यात्मिकबाह्यनामायतनानां तथाऽकुटस्थाविनाशितां प्रकृतिमुपादाय अध्यात्मबहिर्धाशून्यता ।*

अध्यात्म (आँखा आदि) र बाह्य (रुपादि वस्तु) दुई वटाको सत्यता र नित्यता छैन भनेर भावना गर्नुलाई अध्यात्म बहिर्धा शून्यता भन्दछ ।

*एतच्च शून्यतात्रयमधिमुक्तिचर्याभूमौ ।*

माथि उल्लेख गरिएका तीन प्रकारका विदर्शना (विपश्यना) भावना अधिमुक्तिचर्या भूमिमा बस्ने बोधिसत्वहरुले गर्ने हुन् ।

## २६४.४. शून्यता शून्यता

*सर्वधर्मशून्यतया शून्यताया अध्यात्मादिशून्यतालम्बन-ज्ञानस्वभावायापि शून्यत्वेन शून्यताशून्यता ।*

अध्यात्म आदि संपूर्ण वस्तू शून्य हो भन्ने ज्ञान पनि नित्य नभएकोले शून्य नै हो भनेर भावना गर्नेलाई शून्यता शून्यता भन्दछ । यो शून्यता भावना गर्ने बेलामा म भन्ने ग्राहक विकल्प हराएर जाने हुनाले यो भावना प्रयोग मार्गमा वसि रहेका बोधिसत्वहरुले गर्ने हुन् ।

## २६४.५. महाशून्यता

*दशानां दिशां दिग्भिः शून्यत्वेन महाशून्यता ।*

पूर्व, पश्चिम आदि दश दिशाहरुमा वास्तविक दिशा छैन । *(उदाहरणकोलागि भन्नुपर्दा)* अर्थात् मासंगल्ली *(काठमाडौंको एक गल्लीको नाउँ)* बाट जनबाहाल *(काठमाण्डौंको अर्को टोल)* पश्चिम दिशामा पर्दछ । सोहि स्थान इन्द्रचोक*(काठमाडौंको एक ठाउँको नाउँ)* बाट उत्तरमा पर्दछ । त्यसैले दिशा भनेको पनि कल्पना मात्र हो भनेर भावना गर्नेलाई महाशून्यता भन्दछ । यो भावना व्यापक रुपले हुने हुनाले प्रमुदिताभूमिमा पुगेका बोधिसत्वहरुले *(भावना)* गर्ने हो ।

## २६४.६. परमार्थ शून्यता

*परमस्य निर्वाणस्य निर्वाणार्थरुपशून्यत्वेन परमार्थशून्यता ।*

यहाँ परम शब्दको अर्थ निर्वाण हो । निर्वाणको वास्तविक रुप उदाहरण दिएर यस्तो छ भनेर बताउने केहि नभएकोले निर्वाण पनि शून्य हो भनेर भावना गर्नुलाई परमार्थ शून्यता भन्दछ । यो भावना कुनै वस्तुसंग आसक्ति नहुने स्वभाव

भएकोले द्वितीय भूमि विमला भूमिमा बस्ने बोधिसत्वहरुले गर्दछन् ।

## २६४.७. संस्कृत शून्यता

*संस्कृतस्य त्रैधातुकस्य कामादिधातुशून्यत्वेन संस्कृत शून्यता ।*

कामधातु, रुपधातु *(र)* अरुपधातु आदि संस्कृत वस्तुपनि नित्य होईन, हेतु प्रत्ययबाट बनेका हुन् भनेर भावना गर्नुलाइ संस्कृत शून्यता भन्दछ । यो भावना तृतीय प्रभाकरी भूमिमा बस्ने बोधिसत्वहरुले गर्ने गर्दछन् ।

## २६४.८. असंस्कृत शून्यता

*असंस्कृतस्यानुत्पादनिरोधनन्यथात्वस्य तेन शून्यत्वा-दसंस्कृतशून्यता ।*

उत्पन्न नभएको, निरोध नभएको, परिवर्तन भएर नजाने वस्तुलाई असंस्कृत वस्तु भन्दछ । त्यस्ता वस्तु स्वभावैले नै नभएकोले असंस्कृत शून्यता भन्दछ । यो भावनापनि कुनै वस्तुसंग आसक्त नभएकोले चतुर्थ अचिंष्मती भूमिमा बस्ने बोधिसत्वहरुले गर्ने गर्दछन् ।

## २६४.९. अत्यन्त शून्यता

*अन्तस्यान्तेन शून्यत्वाद अतीतान्तत्वेन अत्यन्त शून्यता ।*

उच्छेद (मरण पछि जन्म लिन जानु पर्दैन (अर्थात्) जीवनको अन्त भयो) र शाश्वत (मरण पछि जन्म नित्य) यी दुइको विचमा अन्त (भाग वा सिमाना) छैन भनेर भावना गर्नुलाई अत्यन्तशून्यता भन्दछ । यो भावना पाँचौं सुदुर्जया भूमिमा बस्ने बोधिसत्वहरुले गर्ने गर्दछन् ।

## २६४.१०. अनवराग्र शून्यता

*आदिमध्यावसानेषु तैः शून्यत्वेन अनवराग्रशून्यता ।*

अगाडि, बीच र अन्त भन्ने कल्पनामात्र भएकोले आदि मध्य र अन्त छैन भनेर भावना गर्नु अनवराग्र शून्यता (टुप्पो र फेद नभएको) भन्दछ । यो भावना छैठौं अभिमूखि भूमिमा बस्ने वोधिसत्वहरुले गर्ने गर्दछन् ।

## २६४.११. अनवकार शून्यता

*अवकिरणच्छोरणोत्सर्गलक्षणस्य, अवकारस्य विपर्ययेण अनवकारः तस्यतेन शून्यत्वादनवकारशून्यता ।*

छर्नु, छोड्नु, दिनु आदिलाई अवकार भन्दछ । छर्ने आदि काम नहुनेलाई अनवकार भन्दछ । यस प्रकारले क्रिया(काम) पनि कल्पना हो शून्य हो भनेर भावना गर्ने अनवकारशून्यता भन्दछ । यो भावना सप्तम भूमि दुरंगमा भूमिमा बस्ने वोधिसत्वहरुले गर्ने गर्दछन् ।

## २६४.१२. प्रकृति शून्यता

*सर्वार्यैरकृता प्रकृतिस्तस्यास्तया शून्यत्वात् प्रकृति शून्यता ।*

कुनै वस्तुको स्वभाव कुनै आर्यहरुले पनि बनाएका होईन । त्यस्ता स्वभाव (प्रकृति) लाई संस्कृति (बनाईएका) असंस्कृत (नबनाईएका) विकार वा अविकार भनेर भन्न नमिल्ने भएकोले त्यस्ता शून्यतालाई प्रकृति शून्यता भन्दछ ।

## २६४.१३. सर्वधर्म शून्यता

*धर्मस्य धर्मेण शून्यत्वात् सर्वधर्मशून्यता ।*

सम्पूर्ण संस्कृत र असंस्कृत धर्म समूह परस्परमा अपेक्षाद्वारा मात्र भएको जस्तो देखिनाले संपूर्ण धर्म (पदार्थ)

शून्य हो भनेर भावना गर्नेलाई सर्वधर्मशून्यता भन्दछ। प्रकृतिशून्यता र सर्वधर्मशून्यता निर्विकल्प क्षेत्र शुद्धिबाट चर्याफल भूमिमा प्रतिवेध वशिता र परिकर्म वशिता प्राप्तगर्न अष्टम अचलाभूमिमा बस्ने बोधिसत्वहरुले भावना गर्दछन्।

## २६४.१४. लक्षण शून्यता

*रुपणादिलक्षणस्य रुपादेस्तल्लक्षणशून्यत्वाल्लक्षण शून्यता।*

रुप आदिको दुःख दिने लक्षण रुपमा नभएकोले शून्य हो भनेर भावना गर्नु लक्षण शून्यता भन्दछ।

## २६४.१५. अनुपलम्भ शून्यता

*अतीतादिनां धर्मानामतीतादिष्वध्वसु इतरेतरविषर्यया नुपलभ्यत्वेन अनुलम्भ शून्यता।*

हिजो, आज, भोलि आदि कालको परस्परको कल्पना मात्रै भएकोले बास्तवमा छैन भनेर भावना गर्नुलाई अनुपलम्भ शून्यता भन्दछ। लक्षण शून्यता र अनुपलम्भ शून्यता दुईवटा ज्ञानवशिता लाभ भएकाहरुले गर्ने हुनाले नवौं साधुमती भूमिमा बस्ने बोधिसत्वहरुले गर्ने हुन्।

## २६४.१६. अभाव स्वभाव शून्यता

*नास्ति सांयोगिकस्य धर्मस्य स्वभावः प्रतीत्य समुत्पन्नत्वाद् इति संयोगस्य तेन शून्यत्वाद् अभाव स्वभावशून्यता।*

दुईवटा जोडेर बनेको वस्तुलाई प्रतीत्यसमुत्पन्न भन्दछ। त्यस्तो भावना परतन्त्रमात्र हो, स्वतन्त्र नभएकोले शून्य हो भनेर संयोग गर्नुलाई अभाव स्वभाव शून्यता भन्दछ।

## २६४.१७. भाव शून्यता

*भावस्योपादानस्कन्ध लक्षणस्य तेन शून्यत्वाद् भाव शून्यता ।*

पञ्च उपादान स्कन्ध पनि परतन्त्र भएकोले शून्य भनेर भावना गर्नुलाई भाव शून्यता भन्दछ । अथवा स्कन्ध भनेको समूह हो, त्यो पनि कल्पित भएकोले शून्य भनेर भनिएको हो । अभाव स्वभाव शून्यता र भाव शून्यताद्वारा कर्मवशिता लाभ हुनेहुनाले यी दुई वटा दशौं धर्ममेघा भूमिमा बस्ने बोधिसत्वहरुले गर्ने भावना हो ।

## २६४.१८. अभाव शून्यता

*अभावस्या संस्कृतस्य, आकाशदेस्तेन शून्यत्वाद् अभाव शून्यता ।*

आकाश, प्रतिसंख्यानिरोध, अप्रतिसंख्यानिरोध स्वतः नभएको वस्तु भएकाले अभाव पनि शून्य नै हो भनेर भावना गर्नुलाई अभाव शून्यता भन्दछ ।

## २६४.१९. स्वभाव शून्यता

*स्वभावस्य शून्यताख्यस्य आर्याणां ज्ञानेन दर्शनेन च अकृतकत्वात् स्वभावशून्यता ।*

बोधिसत्वहरुको ज्ञानले र विचारले पनि स्वभाव भन्ने निर्माण गराई नराखेकाले, शून्य नै देखिने हुनाले यस्तै भावना गर्नुलाई स्वभाव शून्यता भन्दछ ।

## २६४.२०. परभाव शून्यता

*उत्पादाद्वा तथागतानामनुत्पादाद्वा स्थितैव धर्माणां धर्मता इति परेण कर्त्रा शून्यत्वात् परभावशून्यता ।*

बुद्धहरु उत्पन्न भएपनि नभएपनि यो संसारमा भएका पदार्थहरु प्रतीत्यसमुत्पादको नियमले चलि नै रहन्छ भन्ने विचारले पर (यो संसार श्रृष्टि गर्ने व्यक्ति) को भाव (अस्तित्व) छैन भनेर भावना गर्नुलाई परभाव शून्यता भन्दछ । अभाव शून्यता, स्वभाव शून्यता र परभाव शून्यता यी तीन वटा वासनासहितको क्लेशावरण र ज्ञेयावरण प्रहाण (नाश) गरेर स्वयंभूज्ञान दिने हुनाले यी तीन वटा शून्यता बुद्धभूमि पुगेका (बुद्धहरु)ले भावना गर्ने हुन् । यी २० वटा शून्यता यस्तै क्रमानुसार नै गर्नु पर्दछ । अन्यथा आनुपूर्वीक क्रम बिग्रिन्छ भनेर विमुक्तिसेन आचार्यको मतमा उल्लेख गरिराखेको छ ।[८२]

यहाँ शून्यताको अर्थ केहि छैन भन्ने होइन । प्रतीत्य समुत्पन्न(हेतु प्रत्ययबाट बनेको वस्तु) स्वतन्त्र छैन भनेको हो भनेर बुझ्नु पर्दछ । यहाँ केवल शून्यताको दिग्दर्शन मात्रै गरिएको हो । प्रज्ञापारमिताको टिकामा १६ वटा शून्यताको हरिभद्रको व्याख्यापनि हेर्न योग्य छ ।[८३]

## २६५. शून्यता शून्यता

शून्य देखिने ज्ञान पनि शून्य भनेर भावना गर्नुलाई शून्यता शून्यता भन्दछ । विशेष कुरा शून्यता शब्दमा हेर्नु होला ।

---

८२. पूर्व पाद टिप्पणी संख्या १, पृ १३५

८३. ऐजन, पृ ४१७

२६६. शोक

प्रिय वियोग हुँदा मनमा उत्पन्न हुने दु:खलाई शोक भन्दछ । प्रतीत्यसमुत्पाद अनुसार शोकबाट अविद्या (अज्ञान र मोह) उत्पन्न हुन्छ भनि उल्लेख गरि राखेको छ ।

२६७. श्रद्धा

*कर्मफलसत्यरत्नेष्वभिसंप्रत्ययः प्रसाद श्तचेतसोऽभि- लाषः श्रद्धा ।*[८४]

पाप र पुण्यको राम्रो-नराम्रो फल छन् । चतुरार्य सत्य, त्रिरत्नप्रति विश्वास हुनु (र) प्रसन्नता सहितको मनको इच्छा नै कुशल श्रद्धा हो । श्रद्धाको कारणले नै मन प्रसन्न हुन्छ (र) छन्द (धर्म गर्ने इच्छा) उत्पन्न हुन्छ ।

२६८. श्रद्धाङ्ग

चतुरार्यसत्य, त्रिरत्न (बुद्ध,धर्म र संघ), पुण्यापुण्यकर्म (र) कर्मफल यी चारवटालाई श्रद्धाङ्ग भन्दछन् । चतुरार्यसत्यलाई वुझेमा वुद्धलाई चिन्छ, धर्मलाई चिन्छ *(र)* संघलाई पनि चिन्छ तथा पुण्यापुण्यकर्म र त्यसको फलपनि चिन्छ । यी चार वटालाई चिनेमा नै श्रद्धा हुने हुनाले यी चारवटालाई श्रद्धाङ्ग भनेका हुन् ।

२६९. श्रोत्रधातु

शरीर धारण गरि राखेको हुनाले श्रोत्र (कान) इन्द्रियलाई श्रोत्रधातु भनेको हो ।

---

८४. पूर्व पाद टिप्पणी सख्या २, पृ ३२

## २७०. श्रोत्रविज्ञानधातु

कानबाट सुन्ने मनलाई श्रोत्रविज्ञान धातु भन्दछ ।

## २७१. श्रोत्रायतन

शब्द रहने वा शब्द भित्रिने द्वार (कान) भएको हुनाले कानलाई श्रोत्रायतन पनि भन्दछ ।

## २७२. षडनुस्मृति

बुद्धानुस्मृति (बुद्धलाई स्मरण गर्ने भावना), धर्मानुस्मृति (बुद्धले दिनु भएको उपदेशको गुण स्मरण गर्ने भावना), संघानुस्मृति (अष्ट पुद्गल संघहरुको गुण स्मरण गर्ने भावना), त्यागानुस्मृति (दानको महिमा स्मरण गर्ने भावना), शीलानुस्मृति (शीलको महत्व स्मरण गर्ने भावना) *(र)* देवतानुस्मृति (देवताहरु यो यो पुण्यद्वारा देवता भयो मैलेपनि त्यस्तै पुण्य गर्नु पर्छ भनि स्मरण गर्ने भावना) यी छ वटा भावनालाई षड्नुस्मृति भन्दछन् ।

## २७३. षडायतन

नाक, आँखा, कान, जिब्रो, शरीर (र) मन यी छ वटा इन्द्रियलाई षडायतन भन्दछन् ।

## २७४. षड्धातु

पृथ्वी, जल, अग्नि, वायु, आकाश (र) विज्ञान (मन) यी छ वटाले नै संसार धारण गरि राखेको हुनाले यिनीहरुलाई षड्धातु भन्दछ ।

२७५. षड्गति

नरकगति, तिर्यकगति(पशुपंछी), प्रेतगति, असुरगति, मनुष्यगति (र) देवगति यी छ वटालाई षड्गति भन्दछ।

२७६. सत्यद्वय

संवृतिसत्य (व्यवहारमा सत्य भएका) (र) परमार्थ सत्य (निर्वाण अनुसार सत्य भएको) यी दुई प्रकारका सत्यलाई सत्यद्वय भन्दछन् । यी दुई प्रकारकै आधारमा (बुद्धले) धर्मदेशना गरि राख्नु भएको छ भनेर बुझ्नु पर्दछ।

२७७. सप्तत्रिंशत् बोधिपाक्षिक

चार वटा स्मृत्युप्रस्थान, चार वटा सम्यक प्रहाण, चार वटा ऋद्धिपाद, पाँच वटा श्रद्धादि इन्द्रिय, पाँच वटा श्रद्धादि बल, सात वटा बोध्यङ्ग (र) आठ वटा अष्टाङ्गिक मार्ग यी जम्मा ३७ वटा विषयलाई बुद्धको बोधिज्ञान लाभ गर्नको लागि चाहिने हुनाले *(सप्तत्रिंशत्)* बोधिपाक्षिक भनेका हुन्। स्मृत्युप्रस्थान आदिको अर्थ सो सो शब्दमा नै हेर्नु होला।

२७८. सप्त पाताल

धरणीतल, अचल, महाचल, आप, काञ्चन, संजीव (र) नरक यी सात वटालाई सप्तपाताल भन्दछ।

२७९. सप्तबोध्यङ्ग

स्मृति, धर्मविचय(प्रज्ञा), वीर्य(उत्साह), प्रीति, प्रश्रब्धि (र) समाधि यी सात वटालाई बोधिज्ञान लाभ गराउने अङ्ग भएकोले *(सप्त)* बोध्यङ्ग भनेका हुन्।

## २८०. सप्तरत्न

चक्ररत्न, अश्वरत्न, हस्तिरत्न, मणिरत्न, स्त्रीरत्न, खड्गरत्न (र) परिणायकरत्न यी सात वटा *(रत्न)* लाई चक्रवर्ती राजाको रत्न भनि उल्लेख गरि राखेका छन् ।

## २८१. सप्तविध अनुत्तर पूजा

वन्दना, पूजना, पापदेशना, अनुमोदना, अध्येषणा, बोधिचित्तोत्पाद (र) परिणामना यी सात वटा मानसिक पूजालाई सप्तविधानुत्तर पूजा भन्दछन् ।

यो नै पूजाको रुपमा *(नेवा: बौद्ध समाजमा)* सत्वपूजा भनेर चलि आएको छ । भद्रचरि प्रणिधान स्तोत्रमा "यावत् केचिड्...... देखि .....स्तवमि अहु सर्वान्......" सम्म चार वटा श्लोक अनन्त बुद्धहरुलाई काय, वाक *(र)* चित्तले अनन्त स्तोत्र गरें भनेर वन्दनाको भावना (विषयमा) उल्लेख गरि राखेको छ ।

फूल, फूलको माला, धूप, दीप, बाजा, छत्र, अबीर आदि सुमेरु *(पर्वत)* परिमाणले चढाएर पूजा गरें भनेर "पुष्प वरेभि च...... देखि .......पूजयमि जिन सर्वान्......" सम्म पूजनाको कुरा उल्लेख गरि राखेको छ ।

राग, द्वेष (र) मोहले युक्त भएर मैले गरिराखेका पाप सबै तपाईंको सामु बसेर निवेदन गरि राखेको छु । यस्ता पाप मैले फेरि गर्न नपरोस भनि "यच्च कृतं ......" आदि एकवटा श्लोकमा पापदेशना उल्लेख गरि राखेको छ ।

स्रोतापन्न आदि संघ, प्रत्येक बुद्ध (र) बुद्ध बोधिसत्वहरु आदि (सबैले) गर्नु भएका दानादिको धेरै नै पुण्य देखेर म अति नै हर्षित भइराखेको छु भनेर "यच्च दश दिशि

......" आदि एकवटा श्लोकमा पुण्यानुमोदना उल्लेख गरि राखेको छ।

दश दिशामा बस्नु भएका मैत्रेय आदि बोधिसत्वहरुले अहिले यस समयमा धर्मचक्र प्रवर्तन गरेर लोकको उद्धार गर्न आउनुस् भनेर "ये च दशदिशि......." एउटा श्लोकले अध्येषणा (प्रार्थना) को कुरा उल्लेख गरि राखेको छ। (साथै) तपाईहरु निर्वाण भएर नजानुस् कल्प कल्पसम्म-धर्मचक्र प्रवर्तन गरि राख्नुस्) भनेर याचना गरि राखेको छ।

वन्दना, पूजना, पापदेशना, अनुमोदना, अध्येषणा, याचना गरेको पुण्यद्वारा सबै सत्वप्राणिहरुलाई बोधिज्ञान प्राप्त होस् (र) हितसुख होस् आदि भनेर बाकि सबै श्लोकले बोधिचित्तोत्पाद र पुण्यपरिणामना गरि राखेको छ।

## २८२. सप्त सागर

क्षार, क्षीर, दधि, उदक, धृत, मधु (र) सुरा यी सात वटा समुद्रलाई सप्त सागर भन्दछ।

## २८३. सभागता

प्राणिहरुको शरीरमा भएको वस्तुहरुको परस्पर समानतालाई सभागता भन्दछ।

## २८४. समाधि

*उपपरीक्ष्ये वस्तुनि चित्तैस्यकाग्रता समाधिः।*[८५]

मन राखि रहनु (वा) एउटै वस्तुमा मात्र मन राखि राख्नुलाई समाधि भन्दछ। शूरंगम, गगनगञ्ज, विमलप्रभ (र)

---

[८५]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ३२

सिंहविक्रीडित यी चार प्रकारका समाधि महायानमा वर्णित छ ।

## २८५. समाधि स्कन्ध

विभिन्न उद्देश्यले चित्त एकाग्र गर्नु, चित्तलाई बाँध्ने विधि बुद्धले बताउनु भयो । ती सबै प्रकारका समाधिका समूहलाई **समाधि स्कन्ध** भन्दछ ।

## २८६. समाध्यावरण

कौसिद्य (कुशल *(कार्य गर्नु)* मा उत्साह नआउनु) मान, शाठ्य, औद्धत्य, अनाभोग (मन नलाग्नु) पुनराभोग (फेरि मन लाग्नु) यी छ वटा समाधिको बिघ्नलाई **समाध्यावरण** भन्दछ ।[८६]

## २८७. समुदय सत्य

काम (सुख र मज्जा)को तृष्णा, स्वर्गादि भवको तृष्णा र उच्छेद (पाप-पुण्य छैन स्वर्ग-नरक छैन) भन्ने विभव तृष्णा नै दु:खको कारण समुदय सत्य हो । (यस विषयको कुरा) चतुरार्य सत्यमा पनि हेर्नु होला ।

## २८८. सम्यक् प्रहाण

१. आफूले गरि रहेको वा आफूसंग भएको कुशल (असल/राम्रो कर्म) नबिग्रोस भनेर उद्योग गर्नेलाई **सम्यक् प्रहाण** भन्दछ ।
२. त्यस्तै आफूसंग नभएको कुशल बनाउनको लागि उद्योग गर्नेलाई पनि **सम्यक् प्रहाण** भन्दछ ।

---

[८६]. पूर्व पाद टिप्पणी सङ्ख्या १, पृ ५४२

३. आफूसंग भएको नराम्रो कर्मलाई हताउन गर्ने उत्साहलाई पनि सम्यक् प्रहाण भन्दछ ।

४ आफूसंग नभएको अकुशल कहिल्यै नआउने गरि उद्योग गर्नेलाई पनि सम्यक् प्रहाण भन्दछ ।

यी चार प्रकारलाई सम्यक् प्रहाण भन्दछ । यहाँ सम्यक् (भन्नाले) राम्रो प्रहाण (उद्योग, उत्साह, वीर्य) भन्ने अर्थ बुझ्नु पर्दछ ।

## २८९. सर्वधर्म शून्यता

यो शब्दको कुरा शून्यता शब्दमा हेर्नु होला ।

## २९०. सङ्घानुस्मृति

सङ्घहरुको गुण स्मरण गर्नु भावनालाई सङ्घानुस्मृति भन्दछ ।

## २९१. संज्ञा

रातो, हरियो, लामो, छोटो आदि साधारण ज्ञानलाई संज्ञा भन्दछ ।

## २९२. संज्ञास्कन्ध

*विषयनिमित्तोद् ग्रहणात्मिका संज्ञा ।*[८७]

रुप आदि विषय रातो, हरियो आदि चिन्ने साधारण ज्ञानलाई संज्ञा भन्दछ । यस्ता संज्ञाको समूहलाई संज्ञास्कन्ध भन्दछ । विशेष जानकारीको लागि पञ्चस्कन्धमा हेर्नु होला ।

---

८७. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ २४

## २९३. संभार

पुण्यसंभार र ज्ञानसंभारको भेदले संभार (साधन) दुई प्रकारका छन् ।

## २९४. संभिन्न प्रलाप

किस्सा कहानी(ले) जस्तै पाँच गर्गादि वृद्धि गर्ने काम नलाग्ने खालका कुराकानी गर्नेलाई संभिन्न प्रलाप भन्दछ । यो वचनद्वारा गरिने अकुशल(हरु) मध्ये एक हो ।

## २९५. संवृत्ति सत्य

*बुद्धि: संवृतिरुच्यते ।*[८८]

हाम्रो बुद्धिलाई संवृति भन्दछ । परमार्थको ज्ञानलाई बुद्धिले छोपेर राख्ने हुनाले (संवरण गरि राख्ने हुनाले) बुद्धिलाई संवृति भनेको हो । हाम्रो बुद्धिद्वारा निर्णय गरेको सत्यलाई संवृत्ति सत्य भन्दछ ।

## २९६. संस्कार

*संस्कारा: पूर्व कर्मण: ।*[८९]

पूर्वजन्ममा गरि आएको कूशल (र) अकूशल कर्मको अवस्थालाई संस्कार भन्दछ ।

## २९७. संस्कार स्कन्ध

नाना प्रकारका मनको भावनाको समूहलाई संस्कार स्कन्ध भन्दछ । यहाँ संस्कारको अर्थ राग द्वेष आदिलाई भनिएको भनेर बुझ्नु पर्दछ ।

---

[८८]. पूर्व पाद टिप्पणी सख्या ४७, पृ. १७०

[८९]. पूर्व पाद टिप्पणी सख्या ९, पृ ५८

## २९८. संस्कृत लक्षण

जाति(उत्पति) जरा (बुढा-पुरानो), स्थिति-स्थिरता), अनित्यता-मरेर वा बिग्रेर जाने) यी चार वटा लक्षण संस्कृत वस्तुको लक्षण भन्दछ।

## २९९. संस्कृत शून्यता

यो शव्दको कुरा शून्यता शब्दमा हेर्नु होला।

## ३००. स्त्यान

*चित्तस्याकर्मण्यता स्तैमित्यंस्त्यानम्।*[१०]

चित्तको कर्मशीलता नहुने (वा) मन्दता आउनुलाई स्त्यान भन्दछ। जब मनमा स्त्यान भावना आउँछ अनि हामीलाई निंद्रा (एवं) आलस्य लागेर आउँछ। यो मोहको अंश हो।

## ३०१. स्पर्श

विज्ञान (मन), इन्द्रिय *(र)* विषय यी तीन वटा (को) संयोगलाई स्पर्श भन्दछ। द्वादशाङ्गप्रतीत्यसमुत्पाद नियम अनुसार स्पर्श वेदनाबाट उत्पन्न हुन्छ भनि उल्लेख गरिराखेको छ।

## ३०२. स्पर्शधातु

भित्रि (र) बाहिरी छाला(को माध्यम) बाट ज्ञानलिनु लाई स्पर्श(धातु) भन्दछ।

## ३०३. स्पर्शायतन

छालाको स्पर्शबाट हुने ज्ञानलाई नै स्पर्शायतन भन्दछ।

---

[१०]. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ३९.

### ३०४. स्मृति

*संस्तुते वस्तुन्यसंप्रमोषश्चेतसोऽभिलपनता ।*[९१]

पहिले देखेका वस्तुलाई चित्तबाट नमेट्ने गरि नहराउने गरि सो वस्तुलाई बारंबार स्मरण गर्नुलाई स्मृति भन्दछ ।

### ३०५. स्मृत्युपस्थान

स्मृति-स्मरण गर्नु लाई उपस्थान-उपस्थित गरिराख्नु लाई स्मृत्युपस्थान (वा स्मृत्युपस्थान भावना) भन्दछ । स्मृत्युपस्थान भावना निम्न चार प्रकारका छन् ।

१. कायानुस्मृत्युपस्थान (शरीरलाई स्मरण गरिराख्नु)
२. वेदनानुस्मृत्युपस्थान (सुखादि वेदनालाई स्मरण गरिराख्नु)
३. धर्मानुस्मृत्युपस्थान (संस्कृत-असंस्कृत आदि धर्मलाई स्मरण गरिराख्नु)
४. चित्तानुस्मृत्युपस्थान (रागले युक्त भएको वा राग नभएको चित्त भनेर आफ्नो चित्त स्मरण गरिराख्नु)

### ३०६. स्वभाव शून्यता

यसको कुरा शकून्यता शब्दमा हेर्नु होला ।

### ३०७. ह्री

*आत्मानं धर्मं वाधिपति कृत्वाऽवद्येन लज्जा ह्रीः ।*

आफ्नो धर्म वा कर्तव्यलाई मूल ठानेर पाप गर्न लाज मान्नुलाई नै कुशल ह्री भन्दछ ।[९२]

---

९१. पूर्व पाद टिप्पणी सङ्ख्या २, पृ ३१

९२. ऐजन पृ ३२

## सन्दर्भ ग्रन्थ सूचि


१ अ.भि.प. (ग्रन्थको नाम थाहा नभएको)

२. जाङ्मो, ताशि र डेछेन चिमे, धर्मसंग्रहः, वाराणसी:केन्द्रीय तिब्बति उच्च संस्थान, १९९३

३. टाटिया, नथमल, (सं.), अभिधर्म समुच्चयभाष्यम्, पाटलिपुत्र:काशी प्रसाद जायसवाद,अनुशीलन संस्था, २०३३

४. त्रिपाठी, श्रीधर, मध्यमक शास्त्रम्, दरभंगा : मिथिला विद्यापीठ, १९८७

५. ? , बोधिचर्यावतार, ?

६. वज्राचार्य, दीव्यबज्र, अद्वय परमार्थनाम संगीति ,भूषण प्रकाशन-२

७. वज्राचार्य, नरेश मान, (सं.), बद्रीरत्नकृतभाष्योपेतः नागार्जुनपादविरचितः धर्मसंग्रह (प्रथमो भाग), काठमाण्डौ, त्रिरत्न प्रकाशन, २०६२

८. वैद्य, पि. एल. (सं.), अष्टसाहस्रिका प्रज्ञापारमिता, दरभंगा : मिथिला विद्यापीठ, १९६०

९. ?, विज्ञप्तिमात्रतासिद्धिः, ?

१०. शास्त्री, द्वारिकादास (सं.), अभिधर्म कोष, वाराणसी : वौद्ध भारती, १९८१

